༄། །དང་ཙོ་ལ་ཅི་ ལྷུང་ཅི་།།

# प्राचीन तत्वीय सम्बत् ल्होकोर च्युङनी

(तत्वीय खगोलशास्त्रमा आधारित ल्होछार पर्वको परिचय)

[An introduction to the Lhochhar Festival Based on the Elemental Astrology]




अजितमान तामाङ

(Ajitman Tamang)

༄།། དང་ཐོ་ལ་ཕྱི་ རྫུང་ཕྱི་།།

# प्राचीन तत्वीय सम्बत् ल्होकोर च्युङनी

(तत्वीय खगोलशास्त्रमा आधारित ल्होछार पर्वको परिचय)

माननीय उर्जा मन्त्री
श्री पोस्ट बहादुर
बोगटी ज्यू
सविनय
२०६५/५/१८

अजितमान तामाङ

प्रकाशक :
रीमठीम नेपाल, काठमाडौं

ཕྲི་ཁེན་ ब्रीखेन (कृतिकार) : अजितमान तामाङ

ཚེ་བུམ་ དེབ་ छेबुम देब (कृति) : ༄༅། །ངང་ལོ་ཡ་ཕྱི་ ཧྲུང་ཕྱི་།།

प्राचीन तत्वीय सम्वत् ल्होकोर च्युङनी

(तत्वीय खगोलशास्त्रमा आधारित लोछार पर्वको परिचय)



ཏེད་པ་ དིང་། तेत्बादीङ (प्रकाशन वर्ष) : माघ शुक्लपक्ष, पानी-पुरुष ड्राओगन वर्ष

जनवरी २०१२

ཛོན་རི་ ཐོན་པ་། ज्ञेनरी थोन्वा (प्रथम संस्करण) : १००० प्रति

जुबा (वितरक) : याम्बुरी बुक प्वाइन्ट, अनामनगर

ཏེད་པ་། तेत्बा (प्रकाशक) : रीमठीम नेपाल, काठमाडौं

ISBN : 2937-2-4418-3

སཝི་། सावी (मुल्य) : नेरु./भारु. १००/- (£/¥ 5.00)

ཚིབ་ པར་ཁང་། छीबा पारखाङ (मुद्रण) : दिदी बहिनी अफसेट प्रेस प्रा. लि.

अनामनगर, काठमाडौं, फोन: ४१०२५११

---

यस पुस्तकको आवरणमा प्रयोग गरिएको रेखाचित्र तेन्जिन नाम्दाक द्वारा कोरिएको डेभिड एल स्नेल ग्रोभको पुस्तक फोर लामाज अफ डोल्पोको पृष्ठ ७७ बाट साभार गरी थप परिमार्जित रुपमा प्रस्तुत गरिएको छ।

---

**PRACHIN TATWIYA SAMBAT LHOKOR CHYUNGNI**

(An Ancient Elemental Era is Belongs to the part of 12th Animal Cycle)

An Introduction to the Lochhar Festival Based on the Elemental Astronomy

# लेखकीय

'प्राचीन तत्वीय सम्वत ल्होकोर च्युडनी' शिर्षकमा ल्होछारको लोकोर सम्वत भनेको सुन्दा अलि नौलो लाग्न सक्छ तर यो बिश्वको ठूलो जनसमुदायले प्रयोग गर्दै आइरहेको यो तत्वीय खगोलशास्त्रमा आधारित प्राचीन सम्वत हो । यो समयत विभिन्न १२ जनावरहरुको नाममा रहेको ल्होकोरच्युडनी 'बाह्रवर्ष चक्र' र खाम ज्युडवा.ङा 'पाँच तत्व' (जसको स्त्री र पुरुष प्रभावहरु हुन्छ)मा आधारित ल्होछार तथा ऋतु परिवर्तनको बसन्त उत्सव (Spring Festival) सँग सम्बन्धित छ ।

यो सम्वत प्रणालीको दार्शनिक र सांस्कृतिक महत्वका पक्षहरु अत्यन्त नयाँ र नौलो होइन । यो युगौं देखि मानवीय दैनिक जिवन व्यवहारमा रहेका सेखां, गाखां 'हिउद बर्षाद', खाडबा सीम्वा 'जाडो ठण्डी', जस्ता ऋतु परिवर्तन, ल्हो पोवा या छार दीड पोवा 'नयाँवर्ष' फेरिनु, ला-पोवा 'महिना फेरिनु', रे-पोवा 'दिन फेरिनु' र दुशी पोवा 'घडिको समय फेरिनु' आदि काल परिवर्तनका विधि अर्थात् घाम, जुन तथा अन्य ग्रह नक्षेत्रादिको खगोलीय गतिविधिको प्राचीन विधि हो । तसर्थ यो तत्वीय सम्वत् प्रणाली भन्नाले मौलिक सांस्कृतिक पर्व ल्होछार, बौद्ध दर्शनका अनित्य एवं परिवर्तनीय दर्शनका संबाहक ऋतु परिवर्तन, त्यसैगरी पाँच तत्वीय भौतिकवादी दृष्टिकोण खाम र उसका यीङ र याङ 'स्त्री पुरुष प्रभाव', मा आधारित तत्वीय सम्वत् ल्होकोर च्युडनी 'बाह्र बर्षचक्र', यसैको आधारमा मापन गरिने राब्ज्युङ ल्होकोर 'साठी वर्षचक्र सम्वतसर' तथा लाकोर च्युडनी 'तत्वीय बाह्रचन्द्र महिना', प्रत्येक दिनको दुई घण्टाको समयको दुशीखोर 'तत्वीय समयचक्र' आदि काल मापनका विभिन्न इकाइ तथा विधि अर्थात् आकासीय पिण्डहरुको गतिविधिको तत्वीय संकेत चिन्हहरुको आधार गरिने प्राचीन खगोलीय अध्ययन विधि तत्वीय खगोलशास्त्र (Elemental Astronomy) र यसको मानब दैनिक जीवनमा गरिने व्यवहारिक अभ्यास पात्रो लगायत भविष्यवाणी निर्धारण गर्ने तत्वीय विधि तथा परम्परा अर्थात् तत्वीय ज्योतिषशास्त्र (Elemental Astrology) हो ।

विश्वको सबैभन्दा धेरै मानव समुदायले अपनाउँदै आएको यो तत्वीय सम्वत् ल्होकोर परम्पराको उद्गम स्थल चिनमा यसको सम्पूर्ण पक्षहरु आजसम्म प्रयोगमा रहेपनि प्राचीनकाल देखि यसलाई अपनाउँदै आएका कयौं समुदायहरुमा अवशेषका रुपमा रहेका छन् । मानव सभ्यताको विकाससँगै विकास भएको यो तत्वीय खगोलशास्त्रका आधारमा निर्धारण हुने ल्हो/लो अर्थात् वर्ष/साल/सम्वत प्रणाली भएतापनि फरक रुपमा बुझ्नु पर्ने परिस्थिति भएको छ । जसले गर्दा एउटै तत्वीय सम्वत ल्होकोर च्युडनी 'बाह्रवर्ष चक्र' का आधार मनाउने प्राचीन उत्सव ल्होछार/लोसार समेत फरक र अर्कै पो हो भन्ने भ्रम संजना हुने अवस्थासम्म पुगेका छन् । तसर्थ तत्वीय खगोलशास्त्रमा आधारित ल्होछार लगायतको सांस्कृति विषय वस्तुहरुको एउटै साझा आधार निर्माण गर्न मदत पुग्नेछ भन्ने उद्देश्यले यो सानो पुस्तीका प्रस्तुत गरेको छु ।

सन १९९० र यसपछि नेपालमा सम्पन्न शसस्त्र जनविद्रोह र जनआन्दोलनहरुले सांस्कृतिक अधिकारको ढोका खोलिदिए देखि निरन्तर यस विषयमा जिज्ञासाहरु राख्दै आउँदा आजको दिनसम्ममा प्राप्त सूचनाहरुको टिपोटलाई सन २०११ नभेम्बर २६ र २७ तारिखका दिन **किरात यले सम्वत् अध्ययन समन्वय समिति**द्वारा आयोजित संगोष्ठिमा **तत्वीय सम्वत र ल्होछार**का बारेमा गोष्ठि पत्र प्रस्तुत गर्ने अवसर पाएको थिएँ । त्यहाँ प्रस्तुत बिभिन्न सम्वतहरुका बारेमा बिभिन्न बिद्वानहरुद्वारा प्रस्त-पत्र तथा टिप्पणीहरुबाट प्रेरित भएर सानै आकारमा भएपनि **तत्वीय सम्वत ल्होकोर र ल्होछार उत्सव** विषयको सो गोष्टिपत्रलाई पुस्तकारमा तयार पार्दै थिएँ। डुक ल्होछारको पात्रो तयार गर्ने तथा ल्होछार पर्वका उपलक्ष्यमा ल्होछारका विषय वस्तुहरुको उठान हुँदा बौद्धिक पर्यटन व्यवसायीहरुको समाजिक संस्था रीमठीम नेपालका सदस्यहरुको तर्फबाट श्री तिलक लामा ज्युको सकृयतामा यो 'प्राचीन तत्वीय सम्वत् ल्होकोर च्युडनी' पुस्तकलाई **रीमठीम नेपाल संस्था**ले प्रकाशनको भार ग्रहन गर्ने विषयमा छलफल भयो जसले गर्दा आज आम ल्होछार प्रेमी पाठकहरु माझ यो पुस्तीकालाई प्रस्तुत गर्ने आवसर प्राप्त भएको हो ।

तसर्थ सर्वप्रथम रीमठीम नेपाल संस्थाका सम्पूर्ण पदाधिकारी तथा सदस्यज्युहरुमा प्रकाशन भार ग्रहन गरिदिनुभएकोमा कृतज्ञता ज्ञापन गर्न चाहन्छु । त्यसैगरी यसको सुद्धासुद्धि तथा कम्प्युटर टंकनमा सहयोग गर्ने मेरी जीवन संगिनी आशा दोङ तामाङका साथै मुद्रणको सुलभ व्यवस्था मिलाई दिनु हुने कुयाङ लामा तथा आवस्यक ढाँचा र पुस्तकको स्वरुपमा ढालिदिनु हुने सूर्य तामाङ लगायत सम्पूर्ण दिदि बहिनी अफसेट प्रेस परिवारलाई विशेष धन्यवाद ज्ञापन गर्न चाहन्छु ।

अन्तमा यस पुस्तीका विगत सन १९९० देखिका टिपोट भएकाले यसमा समाबेस विषय बस्तु, सामाग्री तथा श्रोत व्यक्तिहरु उल्लेख गर्न छुटन गएका भए क्षमायाचना गर्दै आगामी संस्करणहरुमा समाबेस गर्ने छु। यो पुस्तक कुनै समुदाय विशेषको पक्षमा नभएर तत्वीय खगोलशास्त्र र यसका सांस्कृतिक पक्षहरुको बारेमा आधारभूत सूचना दिने उद्देश्यले आम पाठकहरु माझ प्रस्तुत गरेको छु तसर्थ म सबै पक्ष र समुदायको सृजनात्मक सुझावका लागि हार्दिक अनुरोध गर्दछु । थुजेछे ।

**अजितमान तामाङ**
हेराङ युल, याम्बुलीङ, नेपाल युल्सा
खेला छेपा डा, क्युई याव मुपुर्धा ल्हो
२८ जनवरी, सन २०१२

# प्रकाशकीय

विज्ञान, प्रविधि र मानवीय चेतनाको विकासले गतिमान बनाएको विश्व, विश्व समुदायको सदस्य हाम्रो मुलुक नेपाल र नेपाल आमाका एक सन्तती हामी तामाङ समुदाय पनि परिवर्तनशील समाज, मुलुक र देश सँगसँगै समाहित हुने क्रममा नेपालमा भएको राजनीतिक परिवर्तन खासगरी सन् १९९० साल अघिको जनआन्दोलन र त्यसपछिको सशस्त्र जनविद्रोह समेतले दिएको सांस्कृतिक पूर्नजागरण अभियानको एउटा पाटो आदिवासी जातिको पहिचान रक्षा र संरक्षणमा आफ्नै प्रयासमा विभिन्न क्षेत्रबाट अध्ययन अनुसन्धानको कार्य भइरहेको कुरा विदितै छ ।

यसै क्रममा लेखन, अनुसन्धान जस्ता प्राज्ञीक क्षेत्रबाट थोरै भएपनि कार्य अघि बढ्दै आएको छ । यसै क्षेत्रबाट आफ्नो जातिय पहिचान अझ मजबुत बनाउन भूमिका खेल्ने लगनशील अनुसन्धानकर्ता एवं लेखक अजितमान तामाङ, नेपालको तामाङ समुदाय लगायत हिमाली क्षेत्रका आदिवासी जनसमुदायको सभ्यता र संस्कृतिको अनुसन्धानमा संलग्न औंलामा गन्न सकिने अध्ययेता मध्ये एक हुन् । उहाँको पछिल्लो अनुसन्धान कृति 'प्राचीन तत्वीय सम्वत् ल्होकोर च्युङनी' (An Ancient Elemental Era is Belongs to the part of 12th Animal Cycle) **दाङ्खोला ची ज्युङ्ची** प्रस्तुत पुस्तिकाले तामाङ लगायत सम्पूर्ण हिमाली क्षेत्रका जनसमुदायको मौलिक संस्कृति र इतिहासको प्राचीनताको पुष्टि गर्दछ ।

यस पुस्तिकाको प्रमुख पाटो सन् १९९० अघिको करिब २५० वर्ष लामो नेपालको राजनीतिक अन्धकारमय दमन उत्पीडन तथा गोर्खाली औपनिवेसिक कालको कारण अवशेषको रुपमा मात्रै रहेको ल्हो गन्ने परम्परामा सिमित तत्वीय सम्वत् ल्होकोर रहेको छ ।

आजको २१ औं शताब्दीको समाज, युवा वर्ग र अन्य अध्ययनकर्ताले बुझ्ने भाषा र शैलीमा अकाट्य प्रमाणको रुपमा आएको अनुसन्धानमूलक अति महत्वपूर्ण तथ्यहरु सङ्ग्रहीत ग्रन्थ हो भन्ने हामीलाई लागेको छ ।

ल्हो गणनासँग सम्बन्धित ल्होछार (नयाँ वर्ष) पर्वकै सन्दर्भमा पात्रोमा समयको अन्तर पर्दा यो तेरो ! र यो मेरो ल्होछार ! तेरो भन्दा मेरो ल्होछार पुरानो ! राम्रो वा ठूलो भन्ने भ्रम अझै पनि थोर बहुत ल्होछार प्रेमी समुदायमा रहिरहेको सन्दर्भमा यो तथ्यगत प्रमाणको आधारमा प्रस्तुत यो पुस्तकले सम्पूर्ण उच्च हिमाली क्षेत्रका हामी आदिवासीहरुलाई सांस्कृतिक एकताका साथ अघि बढ्न थोरै भएपनि भूमिका खेल्न सक्ने कुरामा हामी आशावादी छौं । ल्होछार वा ल्होगणना पद्धती सम्बन्धि स-साना भ्रम निवारण गर्नका लागि समेत यो महत्वपूर्ण साधन हुने कुरामा हामी विश्वस्त छौं ।

रीमठीम नेपाल, तामाङ पर्यटन व्यवसायीहरुको अनौपचारिक मञ्च हो । यो कुनै एनजिओ वा कुनै राजनीतिक विचार विशेषद्वारा सञ्चालित संस्था होइन । संस्कृति र पर्यटन जसरी अभिन्न अंगको रुपमा रहेको हुन्छ ।

नेपाली पर्यटन क्षेत्रको ठूलो हिस्सामा तामाङ लगायत उच्च हिमाली क्षेत्रका आदिवासी समुदायहरु जसले तत्वीय सम्वत्मा आधारित प्राचीन ल्होछार 'नयाँ वर्ष' उत्सव जो अन्तरराष्ट्रिय रुपमा चीन लगायतका मुलुकहरुमा चन्द्र नयाँ वर्ष तथा वसन्त उत्सवको रुपमा मनाउँदै आएको छ । यो प्राचीन संस्कृति प्रति यो ग्रन्थ प्रकाशनको लागि प्रकाशकको रुपमा हामीलाई पनि योगदान पुऱ्याउने अवसर प्राप्त हुँदा अत्यन्त गर्व महशुस गरेका छौं । यस्तो अवसर दिनुभएकोमा अनुसन्धाता विद्वान लेखकप्रति हामी आभार व्यक्त गर्दछौं ।

उहाँको लेखन तथा अनुसन्धान कार्यले अझ वहुमूल्य र समाज उपयोगी विषय र क्षेत्रमा तिब्र र सबल रुपमा अघि बढ्न सकोस् भन्ने हामी कामना गर्दछौं । ल्हास्सो, फ्याफुल्ला ।

**रीमठीम नेपाल**

(तामाङ पर्यटन व्यवसायीहरुको समूह), काठमाडौं

पानी पुरुष ड्राअीगन वर्ष, जनवरी २०१२

# विषय-सूची

# अध्याय एक
# तत्वीय सम्बत् ल्होकोर

## १.१ परिचय

विश्वमा प्रचलनमा रहेका काल वा समय निर्धारण तथा गणनाका गर्ने प्रणालीहरु मध्ये मुख्य गरी हाल (क) गणितीय सम्वत् र (ख) तत्वीय सम्वत् प्रणाली प्रचलनमा पाइन्छ। गणितीय सम्वत्को वर्ष अङ्कको आधारमा गणना गरिन्छ। जस्तै विक्रम सम्वत् २०६८, नेपाल सम्वत् ११३२, इस्वी सम्वत् २०१२ आदि अंक गणितीय सम्वत्हरु हुन भने नेपालमा ल्होछार वा लोसार नयाँवर्ष पर्वसंग जोडिएको तत्वीय सम्वत्को वर्ष विभिन्न तत्वीय संकेतहरु क्रमसः मुसा, गोरु, बाघ, खरायो, ड्राओगन, सर्प, घोडा, भेँडा, बाँदर, चरा, कुकुर र बँदेल रहेको ल्होकोर च्युडी 'बाह्रबर्षेचक्र', पाँच तत्वहरु क्रमसः काठ, आगो, धातु, जल खाम र यसको धनात्मक र ऋणात्मक प्रभावका आधारमा बर्षहरुको गणना गरीन्छ।

तत्वीय सम्वत् परम्परा अनुसार सन २०१२ लाई तत्वीय सम्वत्मा लेख्नु पर्दा छ्यु-याव डुग ल्हो/लो 'पुरुष-पानी-तत्वीय ड्राओगन बर्ष' लेखिन्छ। यहाँ ड्राओगन तत्वीय वर्ष संकेत हो भने खाम पानी तत्व हो र यो ड्राओगन बर्षको खामको प्रभाव पुरुष हो। यहाँ तत्वीय संकेत ड्राओगन, बाह्र बर्षेचक्रको पाँचौ वर्ष हो। त्यसकारण विभिन्न जीव जन्तु तथा पन्छिको नाममा रहेको बाह्र वर्षेचक्र तत्वीय बर्ष बुझाउने संकेतहरु तत्वीय वर्ष वा साल वा सम्वत् हो। तत्वीय प्रणालीमा प्रत्येक वर्ष बाह्रवर्षे चक्रको एउटा बर्ष संकेतबाट अर्को फेरिने दिनलाई ल्होछार 'नयाँवर्ष' भनिन्छ।

नेपाल भारत, चिनमा प्रचलनमा रहेको गणीतीय सम्वत्हरु चन्द्रपात्रो र सौर्यपात्रोको मिश्रित पात्रो परम्परा अनुसार बर्ष, महिना तथा दिनको गणना गरिन्छ भने तत्वीय सम्वत् प्राणालीमा चन्द्रमानका आधारमा चन्द्रपात्रो अनुसार बर्ष, महिना तथा दिन आदि कालका इकाइहरुको गणना गरिन्छ। सौर पात्रो भन्दा चन्द्र पात्रो परम्परा पुरानो र प्राचीन मानिन्छ।

यी दुबै काल-गणना प्रणालीमा दैनिक मानव जीवनमा व्यवहारमा प्रयोग भइरहेको समयका ठूला इकाइहरु युग, कल्प, प्रकाश वर्ष, सम्वतसर, सम्वत वा साल वा बर्ष, ऋतु, मास वा महिना, पक्ष, साप्ताहिक, दिन आदि कालको सानो इकाइहरु घण्टा, घडी (२४ मिनेट), मिनेट, क्षण, पला/पल(२४ सेकेण्ड), सेकेण्ड आदि इकाइहरुको मापनका आ-आफ्नै विधि रहेको पाइन्छ। कालका यी इकाइहरु मध्ये एक साल वा बर्ष वा एउटा सम्वत्को एकबर्षको

पूर्णता पछि नयाँ साल वा वर्ष वा सम्वत् फेरिने दिनलाई संसारभर विशेष महत्वका साथ उत्सवको रुपमा हर्सो उल्लासपूर्वक मनाउने परम्परा पुरानै हो । तसर्थ नेपाल लगायत थुप्रै मुलुकहरुमा ल्होकोर वा लोकोर (संकेतहरुको वर्षचक्र) तत्वीय सम्वत्मा आधारित ल्होछार वा लोसार नयाँवर्ष प्रारम्भका दिनलाई सरकारले राष्ट्रिय पर्वको सम्मान र राष्ट्रिय सम्वत्को मान्यता दिई सार्वजनिक विदा समेत दिइ आएको छ ।

नेपालका उच्च पहाडी हीमालय क्षेत्रमा बसोबास गर्ने आदिवासी जनसमुदायहरु हुम्ली तामाङ, मुगाली, डोल्पाली, मुस्ताङ्गी, तामाङ, ह्योल्मोपा, गुरुङ, मनाङगे, थकाली, दुरा, जिरेल, लोमी, लेप्चा, भुटिया, तोप्केगोला, ओलाङचुङ, होलुङ, सिङसा, थुदाम, लोबा, चुम्बा, नुप्री, भोटे, शेर्पा, लामाभोटे, चिनिया तिब्बती आदि आदिवासी जनसमुदायले तत्वीय सम्वत्का आधारमा वर्ष वा साल फेरिने दिनलाई ल्होछार वा लोसार 'नयाँवर्ष' उत्सवलाई महान पर्वको रुपमा मनाउँदै आइरहेको छ । त्यसैगरी मुस्ताङ, डोल्पाको तिजिरोङ, मुगुको कर्मारोङ लगायत क्षेत्रहरूमा मनाउने रूङ[1] पर्व तथा तल्लो मुस्ताङका थकालीहरुले मनाउने तोरन्ल (वर्ष फर्किने?) र ल्हफेवा (देव वा वर्ष छुट्टिने?)[2] आदि पर्वहरु पनि यसै संग सम्वन्धित छ ।

तत्वीय सम्वत् अन्तराष्ट्रियस्तरमा एसियाका चीन लगायत एसियाका चिनीया सभ्यताको प्रभाव रहेको देशहरु मंगोलीया, जापान, कोरिया, लाबोस, भियतनाम, कम्वोडिया, हङकङ, सिंगापुर, मलेसिया, इन्डोनेसीया, थाइल्याण्ड, बर्मा, भुटान तथा भारतका कस्मीर, हिमान्चल, दार्जिलिङ, सिक्किम, असम अरुनाचल, आदि स्थानहरुमा मनाउँदै आइरहेको ल्होछार वा लोसार नयाँवर्ष उत्सव प्राचीन तत्वीयसम्वत्को नयाँवर्ष उत्सव हो । नेपालमा उच्च पर्वतीय हिमाली क्षेत्रका आदिवासी समुदायहरुले मनाउँदै आइरहेको प्राचिन तत्वीय वर्ष वा साल वा सम्वत् गणना प्रणालीको नयाँवर्ष (ल्होछार/लोसार) उत्सव र चीनमा चीनीयाहरुले मनाउने चीनिया नयाँवर्ष उत्सव एउटै पर्व हो ।

तसर्थ, ल्होछार वा लोसार र चिनियाहरुको तत्वीय नयाँवर्ष युवान दिन र स्प्रीङ फेस्टीभल अर्थात् वसन्त उत्सव अथवा सिननीयन नयाँवर्ष फेरिने उत्सव एकै हो ।

तत्वीय सम्वतका लोकोरच्युङडी 'बाह्र वर्षे चक्र' को प्रत्येक तत्वीय वर्षहरु पालै पालो एउटा जीव र पाँच तत्व (खाम स्त्री/पुरुष युक्त) मध्ये

१. रुङ पर्व लोसार कै अर्को रुप हो । यो पर्व माघ सुक्लपक्ष प्रतिपदा परेवाका दिन देखि आरम्भ हुन्छ । डोल्पा तिजीरोङका बुद्ध, भ्याक्रि तथा रोकायहरुले हिन्दू धर्मावलम्वीहरुको दसै आसोजमा परेको बखत पुस महिनामा र दसै कार्तिकमा पर्दा माघ महिनामा रुङ पर्व मनाउने गरिन्छ ।

२. लोसार वा ल्होछार थकाली समुदायमा ल्हफेव पर्व बाह्र वर्षमा ल्हो फर्केको अर्थात एक लोकोरमा हुन्छ भने तोरन्ल पर्व प्रत्येक वर्ष वर्ष फर्केको समयमा बडो धुमधामले मनाइन्छ ।

एक तत्व संकेतले भोग गर्ने अर्थात् एउटा तत्वीय वर्ष बुझाउने संकेतबाट अर्को संकेत फेरींदै ल्हो/लो (वर्ष वा साल वा सम्वत्) को तत्वीय संकेतहरु फेरीने प्राचीन प्रणाली हो ।

समग्र यो तत्वीय अधारमा गणना गरीने सम्वत् हो । यही तत्वीय आधारमा काल वा समय गणनाका आधारमा राव्ज्युङ ल्हो अर्थात् सम्वतसर तथा वर्ष भन्दा साना अन्य कालका इकाइहरु महिना, दिन तथा घण्टा आदिको पनि गणना गरिन्छ । तत्वीय आधारमा काल वा समयको गणना गर्ने प्रणाली ग्रह तथा ताराहरु खगोलिय पिण्डहरु सूर्य, चन्द्रमा लगायत ग्रहहरु तथा नक्षेत्रादिसँग सम्वन्धित छ ।

यस्तो विभिन्न तत्वीय संकेतहरुका आधारमा काल वा समयको अवधिहरुको गणना गर्ने वा साल/वर्ष/सम्वत्, महिना, दिन आदि गणना विधि वा परम्परा चिनको मुख्य जन समुदाय हान जातिको उदगम स्थल व्हाङ्हो नदिको किनाराको मानव सभ्यता अर्थात् पेकिङ मानवसभ्याताको थुप्रै महत्वपूर्ण अविष्कार तथा सांस्कृतिक सम्पदाहरु मध्ये एक हो ।

त्यसकारण काल गणनाको यो प्रणालीलाई परम्परागत चिनीया तत्वीय खगोल तथा ज्योतिष प्रणाली भनिन्छ । तत्वीय खगोलशास्त्रीय सिद्धान्तका आधारमा आजसम्म व्यवहारिक प्रयोग भइ रहेका तत्वीय वर्ष/साल/सम्वत्, महिना तथा समयहरुको मापन (विभिन्न जीव-जन्तुहरु तथा पन्छीको नाममा नामाकरण गरिएको तत्वीय संकेतहरुको ल्होकोर च्युङ्नी 'बाह्र वर्षीय चक्र'बाट गरिन्छ ।

यो वर्षचक्रसँग पाँच बटा खामहरु (स्त्री/पुरुष युक्त तत्वहरु) रहेको हुन्छ । तत्वीय खगोलशास्त्रका आधारमा अष्ठकोण दिशा ब्बा (पार्ख) र गसैमा आधारित नौ अङ्कीय जादुगरिय वर्गाकार ली शु (मेवा) संग सम्वन्धित खगोलिय प्राचिन अध्ययन परम्परालाई तत्वीय खगोलसास्त्र (Elemental Astronomy) र यसैका आधारमा मानव समुदायले विश्वास गर्दै आएको ज्योतिष परम्परालाई तत्वीय ज्योतिषशास्त्र (Elemental Astrology) elgG5 (Dagthon, 1995) । सारमा भन्नु पर्दा यो तत्वीय आधारमा गरिँदै आएको खगोलीय अध्ययनको प्राचीन विधि हो ।

## १.२ ल्हो/लो र ल्होछार वा लोसारको शब्दिक अर्थ

तामाङ, गुरूङ तथा थकली, दुरा भाषाको 'ल्हो' शब्दले र शेर्पा, ह्योल्मो, सीङसा, तोप्केगोला, डोल्पाली, होलुङ आदि जनसमुदायहरु र चीनिया तिब्बती भाषामा 'लो' शब्दले सम्वतसर, सम्वत्/साल/वर्ष, ऋतु, उमेर बुझाउने

१२ वटा जीवजन्तुहरुको नामबाट नामाकरण गरिएको तत्वीय वर्षचक्रका वर्ष संकेतहरु लाई बुझाउँछ।

त्यसैगरी तामाङ, गुरूङ तथा थकाली, दुरा भाषाको 'छार' शब्द र नेपालका शेर्पा, ह्योल्मो, शीङसा, तोप्केगोला, डोल्पाली, होलुङ आदि जनसमुदायहरु र चिनिया तिब्बती भाषामा 'सार' शब्द ले 'नयाँ' बुझाउँछ। त्यसकारण ल्हो र छार बाट 'ल्होछार' तथा लो र सार[३] बाट 'लोसार' नयाँ वर्ष वा वर्ष फेरिने वा फर्किने दिन लाई बुझाउँछ।

यो तत्वीय खगोलशास्त्र तथा ज्योतिषशास्त्र चिनमा पाँचहजार वर्ष अघि नै चिनियाहरुले प्रयोगमा ल्याएको इतिहास पाइन्छ। ल्होछार या लोसार भन्नाले तत्वीय खगोलशास्त्रमा आधारित ल्हो/लो वा वर्ष, साल वा सम्वत् फेरिने दिन मनाउने नयाँवर्ष उत्सव लाई बुझाउँछ।

प्राचीनकाल देखि आजभोली पनि यो परम्परालाई तामाङ, गुरुङ, योल्मोपा लगायत सवै जनसमुदायले मान्दै आएका छन्। उनीहरुको दैनिक जन-जीवनमा तपाइ कुन र के ल्हो/लो हो ? कति ल्होकोर हुनु भयो ? भनेर उमेर सोध्ने, यसपालीको ल्हो/लो के हो ?, तपाई कुन ल्हो/लो मा जन्मेको हो ? भनेर सोध्ने तथा उमेर वर्ष तथा सम्वत् वा साल आदिको गणना यही तत्वीय सम्वत् परम्पराबाट गर्ने गरिन्छ।

प्राविधिक र विज्ञान सम्मत अर्थमा ल्हो वा लो शब्दहरुले सौरदिन[४] ३६५ दिनको समयावधि अर्थात् एक सौरवर्ष तथा चन्द्रदिन[५] ३५४ दिनको आसपासको समयावधी अर्थात् एक चन्द्रबर्ष यी दुवै खाले वर्षलाई बुझाउँछ।

मुख्यतया तत्वीय आधारमा वर्ष गणना गर्दा चन्द्रपात्रोमा आधारित भएर चन्द्रदिन, चन्द्रमास तथा चन्द्रवर्षको मान्यतालाई अपनाएको हुन्छ त्यसकारण यो ल्होछार वा लोसार भन्नाले चन्द्रवर्ष फेरीने दिन वा चन्द्र नयाँवर्ष (Lunnar New Year) को प्रथम चन्द्र महिनाको प्रथम दिन हो।

## १.३ ल्हो वा लो तत्वीय वर्ष/साल/सम्वत्

नेपालका तिब्बती वर्मन भाषापरिवारका भाषाहरुमा ल्हो/लो शब्दले वर्ष/साल/सम्वत्/सम्वतसर वर्षलाई बुझाउछ। यहाँ तत्वीय वर्ष/साल/सम्वत्/सम्वतसर भन्नाले वर्ष वा साल वा सम्वत् वा सम्वतसरको गणना

---

३. 'सार' शब्दको प्रयोग तामाङ तथा गुरुङभाषामा पनि 'सार्वा' अर्थात् फक्रनु या फुल्नु या चहकिलो हुनुभन्ने अर्थमा भएको पाइन्छ जसले नयाँ फूल फक्रनुझैं नयाँवर्ष फेरीनुको अर्थमा पनि लिएको पाइन्छ।
४. सौरदिन: पृथ्वीले सूर्यलाई फन्को मार्दा हुने उज्यालो (दिन) र अंध्यारो (रात) हुने कालको योग २४ घण्टाको अवधी।
५. चन्द्रदिन: चन्द्रमाले पृथ्वीलाई फन्को लाग्ने २३.५ घण्टा बराबरको समयावधी।

गर्दा गणितीय अङ्कको प्रयोग नगरी विभिन्न जीव-जन्तु तथा पन्छीको नामबाट बाह्र वटा फरक-फरक वर्ष संकेतहरुको नामाकरण गरिएको हुन्छ ।

तत्वीय वर्षका संकेतहरु १२ वटा विभिन्न जीवजन्तुहरु क्रमसः १. मुसा, २. गोरू, ३. बाघ, ४. खरायो, ५. ड्राइगन, ६. सर्प, ७. घोडा, ८. भेडा, ९. बाँदर, १०. चरा, ११. कुकुर, १२. बँदेल नामाकरण गरेको हुन्छ (हेर्नुहोस् तस्वीर-१) । तत्वीय सम्वत प्रणालीमा तत्वीय वर्षको संकेतहरुको आधारमा कुनै पनि प्रकारको कालको मापन इकाइ, दिन, महिना तथा बर्ष वा साल तथा सम्वत्को निर्धारण गरिन्छ ।

नेपालमा प्रत्येक वर्ष राजकीय सम्मानका साथ मनाउँदै आएको तत्वीय सम्वत् वा साल फेरिने उत्सव तत्वीय नयाँवर्ष बुझाउने 'ल्होछार वा लोसार' शब्दहरुले तत्वीय वर्षको संकेतहरु अर्थात् बर्ष या साल या सम्वत् फेरिनु हो ।

तत्वीय वर्ष अर्थात् सम्वत्का एक संकेत चिन्हबाट अर्को संकेत चिन्हमा बदल्ने वा फेरिने वा नयाँ बर्ष या सम्वत् आगमन वा प्रवेशलाई बुझाउँछ । यस तत्वीय वर्ष परम्परा अनुसार यसपालिको सन २०११ वर्ष/साल वा सम्वत्लाई तत्वीय सम्वत्मा भन्नु वा लेख्नु पर्दा च्याग-मो ह्योशी ल्हो/लो 'स्त्री-फलाम-तत्वीय खरायो वर्ष' (Female-Iron Rabbit Year) भनिन्छ । यहाँ जन्तु वा जीव खरायो तत्वीय बर्ष हो भने खाम फलाम तत्व हो र यो खरायो वर्षको खामको प्रभाव वा भेद स्त्री हो । यहाँ खरायोले तत्वीय संकेत बाह्र वर्षचक्रको चौथो वर्ष हो । त्यसकारण विभिन्न जीव जन्तु तथा पन्छिको नाममा रहेको बाह्र वर्षे तत्वीय वर्ष बुझाउने संकेतहरु तत्वीय वर्ष/साल/सम्वत् हो ।

### १.४ तत्वीय सम्वत् संकेतहरुको नामकरणका प्रसंगहरु

अन्तमा ल्होकोर च्युङडी अर्थात १२ वटा वर्षहरुको नामाकरण कसरी हुन गयो भन्ने सम्बन्धमा केही रोचक प्रसंगहरु पाइन्छ । तर कसरी १२ जीवहरुको नाम रहन पुग्यो भन्ने सन्दर्भमा सबैभन्दा पुरानो परम्परा तथा इतिहास बोकेको चीनियाहरु बिभिन्न कथनहरु पाइन्छ ।

अरु समुदायमा भने यस्तो प्रसंग तथा कथनहरु सुन्नमा आएको छैन । चीनियाहरुमा दुई प्रकारको कथनहरु पाइन्छ । यी जीवजन्तुको नाम सम्वन्धमा पनि नेपालका केहि समुदाय र भियतनामीहरुमा एक दुइवटामा समान र केहीमा भिन्नता पाइन्छ ।

(क) चीनमा इसापूर्व २६०० बर्ष पहिले देखि चलिआएको बर्ष चक्र परम्परा चिनियाँ बादशाह ह्वाङ ती (Huang Ti) ले पहिलो पटक प्रयोगमा ल्याएको

विश्वास गरिन्छ ।

चिनिया दन्त्य कथा अनुसार भगवान बुद्धले परिनिर्माण हुने निश्चित भए पछि संसारको सम्पूर्ण प्राणीहरुलाई विदाइका निम्ति निम्त्याउनु भएको थियो । निम्तो मान्न भेला भएका प्राणीहरु मध्ये मात्र १२ प्राणीहरु भगवान बुद्ध साम् आइपुगे ।

उनीहरुलाई पुरस्कार स्वरुप बुद्ध भगवानले पहिले आइपुग्ने जीवको नामवाट क्रमश: सर्वप्रथम आइ पुग्नेवाट एक-एक जनालाई एउटा-एउटा बर्षको नाम दिएर १२ बर्ष चक्रको नामाकरण गर्नु भएको थियो भनेर भनिन्छ । चिनियाँहरुमा १२ बर्षे बर्षचक्रको प्रत्येक जीवले जन्म बर्षको शासन तथा व्यक्तित्व दर्शाइ रहेको हुन्छ भन्ने विश्वास गर्दछन् । (ख) अर्को कथन अनुसार "जाड बादशाहले एक पटक सबै भन्दा छिटो कुन प्राणी रहेछ भन्ने थाहा पाउन एउटा प्रतियोगिताको आयोजना गरेको थियो अरे । बादशाहले तोकिएको नदी पार गर्ने (तर्न सक्ने) प्रथम हुने १२ प्राणीहरुलाई धरतीको १२ हाँगाको रुपमा चन्द्र पात्रोको बर्ष चक्रमा समावेश गर्ने निधो गरेका छन् । त्यो प्रतियोगितामा सामेल जीव तथा जन्तुहरु माझ गोरुले आफूभन्दा पौडन कमजोर बिरालो तथा मुसालाई आफ्नो ढाडमा( आड्मा) बोकेर खोला तारी प्रतियोगितामा सहयोग गर्ने बाचा गरे छन् ।

नदि तर्नेक्रममा नदी बिचमा पुगे पछि मुसाले बिरालोलाई नदिमा धकेली दिए र आफू भने गोरुको कान भित्र बसेका थिए । जब खोला तरीसके पछि गोरुले आफ्नो ढाडमा रहेको मित्रहरुलाई ओराल्न लाग्दा मुसा फुत्त उफ्रेर झरे । उनी बादशाहको अगाडी पहिले पुगेर प्रथम भए र बिरालोले पानीमा डुबे भने मुसा प्रथम भएकाले तत्वीय बर्ष चक्रमा पहिलोमा परे, दोश्रोमा गोरु परे । यही रितले अन्तिममा बँदेल पुगेकाले १२ औं तत्वीय बर्षको नामकरणमा अन्तिममा बँदेल परे" भन्ने उल्लेख गरिएको छ ।

यसरी तत्वीय बर्षचक्र प्रणालीको बर्षहरुको चक्र लोकोर अर्थात् ल्हो-खोर्लोमा चिनिया परम्परामा बाहेक भियतनाम, नेपालका केही तामाङ र गुरुङहरुमा खरायो बर्षलाई बिरालो बर्ष गणना गर्ने चलन पाइन्छ ।

त्यसैगरी अन्य बर्षहरुको पनि भिन्नता छ तर तत्वीय सम्बतको उदगम् थलो चिन तथा यस परम्पराको लामो समय देखि अपनाउँदै आएका मुलुकहरुमा सयौं बर्ष देखि प्रचलनमा रहेको १२ जीवहरुको बर्षचक्र लाई प्रतिनिधीत्व गर्ने तत्वीय संकेत जीवहरुको नाममा एक रुपता पाइन्छ । विश्वब्यापी एकरुपताका लागि पनि हामीले चिनिया मूलकाहरुले मान्दै आएको ल्होकोर च्युडुनी '१२ बर्षचक्र' लाई नै आधार मान्दै आएकाछौं ।

# अध्याय दुई
# तत्वीय सम्बत् ल्होकोरको प्रयोग

## २. ल्हो/लो तत्वीय सम्बत्को प्रयोग

मानव सभ्यताको विकासको क्रममा विकास भएका ज्ञान तथा विज्ञानहरु मध्ये महत्वपूर्ण भाषा र लिपि हो। भाषाको लेख्य परम्परा लिपिको विकास हुनु पूर्व नै मानव व्यवहारिक प्रयोगमा आइसकेको खगोलीय गतिविधिलाई नियाल्ने मापन गर्ने विधिहरु मध्ये तत्वीय काल निर्धारण, मापन तथा गणनाको विधि एवं परम्परा तत्वीय आधारमा कालका व्यवहारीक इकाइहरु वर्ष, महिना, दिन, घण्टा, मिनेट, सेकेण्ड आदिको गणना विधि रहेको पाइन्छ। यही आधारमा यो प्राचीन परम्परा र विधिमा आधारित तत्वीय वर्ष/साल/सम्बत्को प्रयोग संसारमा प्रचलनमा रहेको सबैभन्दा पुरानो चन्द्र र सूर्यको गतिविधि अर्थात् काल वा समय (चन्द्रमाले सूर्यलाई परिक्रमा गर्न लाग्ने ३६५ दिन) मापनको वैज्ञानिक इकाइ सम्वत् या वर्ष अथवा साल गणनाको परम्परा हो।

यही एक वर्ष कालको अवधिलाई साल, सम्वत् तथा वर्ष भनिन्छ। अंक तथा वैज्ञानिक लेखन प्रणालीको विकास हुनु पहिले देखि रहेको तथ्यले नै तत्वीय सम्वत्को प्रयोग संसारमा सबैभन्दा पुरानो सम्वत् गणना गर्ने परम्परा हो भन्ने प्रमाणित गर्दछ। खगोलीय गतिविधिको तत्वीय विधिबाट नियाल्ने परम्पराको अवशेष कै रुपमा आज पनि भारतीय तथा पाश्चात्य सिद्धान्त गणितीय ज्योतिष (ग्रेगोरियन पद्धति) तथा फलित ज्योतिष परम्परामा समेत रासीफलका रुपमा विभिन्न जीवहरुको तत्वीय संकेत प्रणालीको प्रयोग प्रतिविम्वित रहेको अझै देख्न पाइन्छ। तसर्थ राष्ट्रिय तथा अन्तराष्ट्रिय स्तरमा तत्वीय सम्वत्को प्रयोग कुन देशमा कहाँ कहाँ भएका छन् भन्ने विषयहरु निम्नानुसार प्रस्तुत गर्न सकिन्छ।

## २.१ नेपालमा तत्वीय ल्हो/लो सम्वत्को प्रयोग

तत्वीय सम्वत् प्रणाली नेपालमा पनि मौलिक ढंगले प्रयोग हुँदै आएको लामो इतिहास पाइन्छ। यहाँका तामाङ, गुरुङ लगायतको आदिवासी समुदाय जति पुरानो हो यो सम्वत् प्रणाली त्यति नै पुरानो हो। तत्वीय खगोलसास्त्र र ज्योतिषशास्त्र (इलमेन्टल एस्ट्रोलोजि एन्ड एस्ट्रोनोमि) को दैनिक जीवनमा

प्रयोग तथा यसका आधारमा वर्ष, महिना, दिन, समय घडी, पला आदिको गणना गर्ने र वर्ष फेरिने पर्व (नयाँ वर्ष उत्सव) मनाउने प्रचलन प्राचिन काल देखि नै रहेको पाइन्छ।

यो सम्वत् प्रणालीको प्रयोग नेपालको सम्पूर्ण उच्च पहाडी हिमालय क्षेत्रमा पहिले देखि भएको तथ्य तथा आधारहरु निम्नानुसार रहेको पाईन्छ।

## (क) ठूलो जन समुदायले प्रयोग गर्ने ल्होकोर सम्वत्

नेपालमा प्रयोग भइ रहेको विभिन्न प्रकारका सम्वत्हरु मध्ये प्राचिन समय देखि प्रचलनमा रहेको एउटा सम्वत् तत्वीय सम्वत् हो।

यो सम्वत्कै आधारमा नेपालको हिमाली उच्च पर्वतीय क्षेत्रमा आदिकाल देखि बसोवास गर्दै आएको तामाङ गुरुङ, सेर्पा, योल्मोपा, हुम्ली, जुम्ली, दोल्बुपा, तीजीरोङबा, कर्मारोङपा, मुगाम्पा, विष्ट (भोटे), थकाली, छन्तेल, मगर (हिमाली), मनाङबा, नुप्रीपा, चुम्बा, दुरा, जीरेल, लोमी, सीङसाबा, थुदाम, तोप्केगोला लगायतको सबै आदिवासी जनजाति समुदायहरुले ल्होछार/लोसार तत्वीय वर्ष गणना या वर्ष फेरिने परम्परालाई मान्दै ल्होछार वा लोसार मनाउँदै आएका छन्।

यो तत्वीय सम्वत् चीन लगायत एसियाका दर्जनौ मुलुकहरुमा प्रयोगमा रहेको आधारमा भन्ने हो भने यो सम्वत् विश्वको सबैभन्दा पुरानो र प्राचीन तथा सबैभन्दा बढी जनसमुदायले प्रयोग गर्दै आएको विश्वकै छुट्टै मौलिकता युक्त एक काल गणनाको विधि तथा काल गणनाको इकाई ल्हो वा लो अर्थात् साल वा सम्वत् हो।

## (ख) स्वयम्भूको स्थापनामा उल्लेख भएको ल्होकोर सम्वत्

स्वयम्भू पुरान अनुसार काठमाण्डौ उपत्यकाको उत्पत्ति स्वयम्भूसँगै उत्पत्ति वा निर्माण भएको विश्वास गरिन्छ। यसको स्थापना सम्वन्धमा नेपालका आदिवासी बौद्ध जनसमुदायहरुको आआफ्नै धारणाहरु पाईन्छ। तापनि यहाँ स्वयम्भू स्तुपाको नामाकरण, निर्माण वा स्थापना वर्ष सम्वन्धमा उत्खनन गर्न लागिएको हो। नेपालका तामाङ, मनाङबा, योल्मोबा आदि लगायतका थुप्रै बौद्ध समुदायहरुले यो अति प्राचीन स्तुपालाई फाबा सीङगुन नामले ठूलो तिर्थस्थलको रुपमा चिनिन्छ तिब्वतीहरु राङज्युङ छ्योर्तेन छेन्पोका नामले चिन्दछन्।

चित्र-१



स्वयम्भूको पूर्वाभिमुख रहेको स्थापनाको बर्ष जनाउने तत्वीय सम्वत् फाग लो अर्थात् बँदेल वर्ष अङ्कित सम्वत्सज्ञा चित्र अभिलेख

आदिवासी तामाङ बौद्धहरुको भाषा संस्कृतिको महत्वपूर्ण तिर्थ स्वयम्भूको पहिचान फाग्पा सीङगुन वा फावा सीम्बु नामले यो स्तुपा तत्वीय फाग अर्थात् तत्वीय बँदेल वर्षमा निर्माण भएको संकेत गरेको पाइन्छ। नेपालको सवैभन्दा ठूलो बौद्ध समुदाय तथा आदिवासी जाति तामाङ समुदायको तामाङभाषाको स्वयम्भूलाई बुझाउने नाम तथा प्राचीन काल देखि स्वयम्भूमा स्थापित तत्वीय वर्ष/सम्वत् ल्होकोरको चित्रात्मक सम्वत् अभिलेख दुवै तथ्यले फाग्पा सीङगुन सम्वत संज्ञा[६] हो भन्ने स्पष्ट गर्दछ।

स्वयम्भूको थुम्कोमा पुग्ने बित्तिकैको पूर्वाभिमुख प्रवेश द्वार सन्मुख रहेको बज्रधातु मण्डला र ठूलो बज्रका मुनी ढुगामा कुँदिएको ल्होकोर च्युङनी अर्थात् बाह्र वर्ष तत्वीय बर्ष/साल/सम्वत् संकेतहरु कुँदिएको सम्वत अभिलेखको बाह्रौं तत्वीय बँदेल वर्ष संकेत यो प्रवेशद्वारको पूर्वपट्टि रहेको कुराले यो प्राचीन स्वयम्भू स्तुपाकोनिर्माण बँदेल बर्षमा भएको पुष्टि हुन्छ।

स्वयम्भू स्तुपाको बज्रधातु मण्डलाका मुनितिरको तत्वीय सम्वत् गणनाका तत्वीय संकेतहरु क्रमस: १. मुसा, २. गोरू, ३. बाघ, ४. खरायो, ५. ड्राइगन, ६. सर्प, ७. घोडा, ८. भेडा, ९. बाँदर, १०. चरा, ११. कुकुर र १२. बँदेलको ढुगामा कुँदिएको आकृति चित्र देख्न सकिन्छ।

उपत्यकाकै सर्वप्राचीन मानिने यस बौद्ध स्मारक स्वयम्भूको पूर्वाभिमुख केन्द्रमा स्थापना गरिएको तत्वीय सम्वत् वर्षचक्रका (चित्रात्मक) बाह्रौं तत्वीय सम्वत्/वर्ष जनाउने चित्रात्मक अभिलेख संकेत फाग् ल्हो अर्थात् 'बँदेल' तत्वीयवर्षको चित्रअभिलेख अंकित छ। यस तत्वीय बँदेल बर्ष/सम्वत्

६. सम्वत्संज्ञाभिलेख: यहां सम्वतसंज्ञाभिलेख भन्नाले सम्वत् सहितको अभिलेख र त्यो सम्वतकै आधारमा निर्माण भएको शब्द नाम वा संज्ञा शब्द हो। तत्वीय सम्वत् प्रणालीका आधारमा नामाकरण भएको तथ्यका रुपमा स्वयम्भू स्तुपासंग फाग तत्वीय बर्ष र बौद्ध स्तुपा ज्या तत्वीय सम्वत् चरा वर्ष हो। यस्तो परम्परा अन्य पनि समुदायमा पनि प्रयोग भएको पाइन्छ। जस्तै वि.सं. १९९० सालको शक्तिशाली भूकम्पलाई सम्झनु पर्दा नब्बे सालको भुँइचालो भनेर सम्झनु, त्यसैगरेर २००७ को क्रान्तिलाई सातसालको क्रान्ति, त्यसै गरी २०४७ सालको जन आन्दोलन, २०६२/०६३ को जनआन्दोलन आदि नेपालमा भएको ठूला परिवर्तनहरुको सम्वत् संज्ञा वा नाम हो तसर्थ यो नाम आफैमा सम्वत संज्ञा र अभिलेख पनि हो।

संकेतले नेपालका तामाङ लगायत आदिवासीहरूले सदियौं देखि आफ्नो लोक गित, संगित तथा लोक साहित्यहरुमा उल्लेख गरि आएको स्वयम्भू स्तुपाको नाम 'फाग्पासिम्बु' तथा 'फाग्वा सीडगुन' अर्थात् स्वयम्भू स्तुपालाई पुकारीने नामले यो स्तुपा फाग ल्हो[७] 'तत्वीय बँदेल वर्ष'मा बनेको तथ्य सो तामाङभाषाको संज्ञासम्वत् तथा चित्राभिलेखले स्पष्ट गर्दछ ।

यो सम्वत् संज्ञा सहितको अभिलेख तथा यसको व्यवहारिक प्रयोगका आधारले प्राचीन स्वयम्भू स्तुपाका सम्बन्धमा हजारौं वर्ष देखि निरन्तर पुस्तान्तरण र हस्तान्तरण हुँदै आएको तामाङ लगायत समुदायको आदिवासीय अवधारणा यहाँ देखिन्छ ।

आदिवासी जनसमुदायमा पाइने स्थान नामका अवधारणा तथा ऐतिहासिक तथ्यले स्वयम्भूस्तुपा स्थापना भएको वर्ष तत्वीय वर्ष चक्रको बाह्रौं तत्वीय फाग ल्हो/लो अर्थात् तत्वीय बँदेल वर्ष जनाउने चित्रभिलेख तथा संज्ञा सम्वत्ले पनि प्रमाणीत गर्दछ ।

## (ग) बौद्ध स्तुपा स्थापना सँग जोडिएको ल्होकोर सम्वत्

तत्वीय सम्वत् उल्लेख भएको अर्को ऐतिहासिक बौद्ध सम्पदा एवं प्राचीन मानव निर्मित स्मारक काठमाण्डौ उपत्यकामा रहेका बौद्ध स्तुपा हो । बौद्ध स्तुपालाई तामाङ लगायतको नेपालमा लोकोरमा आधारित तत्वीय सम्वत् अपनाउदै आइरहेका आदिवासी बौद्ध समुदायले आफ्नो भाषामा 'ज्यारोङखास्योर' नामले जान्दछ । तसर्थ, तामाङ लगायत बौद्ध समुदायले यो स्तुपालाई ज्यारोङ खास्योर नै किन भनियो भन्ने सन्दर्भमा बुझ्न जरुरी हुन्छ ।

ज्यारोङ खास्योर (ज्या-रोङ-खा-स्योर[८]) संज्ञा शब्दले यो स्तुपा तत्वीय

---

७ यो तिब्बती बमंन भाषाको 'फाग' शब्दलाई आर्य अवलोकेश्वरलाई बुझाउन प्रयोग भएको भए पनि स्वयम्भुको सन्दर्भमा भन्नुपर्दा तिब्बतमा बौद्ध साहित्यको अनुवाद छैटौं-सातौं शताब्दी ताका पछिमात्र भएको र तिब्बतमा बौद्ध साहित्य स्वयम्भूलाई 'राङज्युङ छ्योर्तेन छेन्पो' भनिन्छ र तिब्बतमा बौद्ध धर्मको प्रचार तथा बौद्ध साहित्यको अनुवाद हुनु पहिले नै स्वयम्भु निर्माण भएको हो । तामाङ समुदायको 'कात्याला व्हाओ' मा स्वयम्भुलाई "फाग्पा सीडगुन", "फाग्पा सीम्बु" भनेर उल्लेख भएको पाइन्छ भने सामान्य रुपमा 'सीङ्गोन' भन्ने गरिन्छ । यसै गरी उपत्यकाका स्थानीय तथा बौद्ध नेवारहरुले पनि स्वयम्भूलाई 'सीम्बु' 'सीङ्गु' नै भनिन्छ । तामाङहरुले प्रयोग गर्ने 'फाग्पा सीङगोन' नामको 'फाग्' ले तत्वीय वर्षचक्रका बाह्रौं संकेत 'बँदेल वर्ष'लाई संकेत गर्दछ । यो तत्वीय वर्षको शिला स्वयम्भूमा प्रतिस्थापित छ । यसै गरी तामाङ बौद्ध दृष्टिकोणका आधारमा बौद्ध स्तुपालाई 'ज्यारोङ खास्योर छ्योर्तेन' नामले चिनिन्छ । यहाँ पनि 'ज्यारोङ' शब्दको 'ज्या' शब्दले तत्वीय वर्षचक्रको दशौं संकेत 'चरा वर्ष' लाई संकेत गरिएको हो ।

८ यहाँ ज्या को अर्थ 'चरा' तत्वीय वर्ष, रोङको अर्थ 'उर्वर तथा बेसी क्षेत्र', खा को अर्थ 'मुख वा मौखिक वचन' र स्योर 'फुर्कानु' अर्थात् तत्वीय चरा वर्षमा यो स्तुपा निर्माण गर्न मौखिक निर्देशन वा आदेश भएर बनेको भन्ने हुन्छ । यो जन विश्वास र भनाइ हो । तिब्बती बौद्ध साहित्यमा भने कुखुरा तथा बंगुर पालन गर्ने व्यापारीको कथन पाइए पनि तिब्बतमा बौद्ध साहित्य र धर्मको विकास तथा विस्तार हुनु पहिले नै स्वयम्भू र बौद्धको स्थापना भएको वा भइ सकेको तथ्य सोही साहित्यले पनि स्वीकारीएको पाइन्छ ।



चित्र-२

बौद्ध स्तुपा अर्थात् ज्यारोङखास्योर तत्वीय सम्वत् ज्या लो ल्हो अर्थात चराबर्ष वा सालमा बनेको ज्यारोङखास्योर स्तुपा

वर्षचक्र अनुसार तत्वीय ज्या (चरा) वर्षमा निर्माण भएको हो भन्ने संकेत गर्दछ अर्थात् ज्यारोङखास्योर तत्वीय सम्वत्‌संज्ञा[१] हो। यहाँ ज्या शव्दले तत्वीय सम्वत् चरा, रोङ शव्दले उच्च पहाडी फेदीको उपत्यका वा समथर तथा उर्वर भूमि, खाले मौखिक तथा स्योरले मौखिक आदेस वा निर्देशन वा स्वीकृति दिएको भन्ने अर्थ लाग्दछ अर्थात् उच्चपर्वतीय फेदीको समथर भूभागमा मौखिक आदेस वा स्वीकृतिमा चरा तत्वीय वर्षमा निर्मित भन्ने हुन्छ।

यो तथ्य तामाङ लगायतका आदिवासीहरुको मातृभाषामा बौद्ध स्तुपाको व्यवहारिक रुपमा प्रयोग भइ रहेको नाम वा संज्ञाको आधारमा जानिने हुनाले यो सम्वत्‌संज्ञा हो भन्ने कुरा बौद्धहरुको मौखिक अभिलेखले पुष्टि गर्दछ। यो ज्या 'चरा' तत्वीय वर्ष संकेतको वर्षचक्रको क्रम अनुसार दशौं स्थानमा रहेको तत्वीय वर्ष वा सम्वत् हो।

पुरातात्वीक महत्वका प्राचीन दुइ बौद्ध स्मारकहरूको मौलिक सम्वत्‌का आधारमा नामाकरण पाइनुले नेपालका आदिवासी समुदायहरु तामाङ, गोल्माली, डोल्पाली, मुस्ताङी लगायत सम्पूर्ण उच्च पर्वतीय तथा हिमाली जन-समुदायहरुले प्रयोग गरिरहेको सम्वत तत्वीय लोकोर प्रणालीको प्राचीनताको पुष्टि गर्दछ।

### (घ) प्राचीन ल्हो/लो तत्वीय ल्होकोर सम्वत्‌को प्रयोग :

नेपालको सबैभन्दा पुरानो आदिवासी जाति तामाङ लगायतका समुदाय, काठमाण्डौ उपत्यकाको उत्पती संग जोडीएको बौद्ध स्मारकहरु स्वयम्भू तथा बौद्ध स्तुपाका बारेमा भन्नु पर्दा प्राचीनकाल देखिनै कुनै न कुनै रुपमा तत्वीय सम्वत् संज्ञाको प्रयोग भएको प्राचीन र ऐतिहासिक आधार

१. सम्वत्‌संज्ञा भनेको सम्वत् संग जोडिएको नाम वा संज्ञा हो। तत्वीय सम्वत् प्रणालीका स्वयम्भू स्तुपासंग प्राप्त तत्वीय वर्ष र बौद्ध स्तुपा संग ज्या तत्वीय चरा वर्ष मात्र होइन अन्य परम्परामा पनि यस्तो सम्वत्‌संज्ञा पाइन्छ जस्तै वि.सं. १९९० सालको शक्तिशाली भूकम्पलाई सम्झनु पर्दा नब्बे सालको भुइँचालो भनेर सम्झनु, त्यसैगरेर २००७ को क्रान्तिलाई सातसालको क्रान्ति, त्यसै गरी २०४७ सालको जन आन्दोलन, २०६२/०६३ को जनआन्दोलन आदि नेपालमा भएको ठूला परिवर्तनहरुको सम्वत् नाम हो भने यो नाम आफैमा सम्वत्‌अभिलेख पनि हो।

चीनको स्वशासित प्रदेश तिब्बत, हङकङ र भारतको लदाख, दार्जिलिङ, सिक्किम, अरुणाचल प्रदेश, हिमालचल प्रदेश आदि स्थानहरुमा प्राचीन काल देखि नै तत्वीय खगोलशास्त्रमा आधारित नयाँवर्ष फेर्ने परम्परा र ज्योतिषशास्त्रलाई निरन्तर प्रयोग गरी रहेको पाईन्छ।

अग्नी खरायो वर्ष तदनुसार सन १०२७ मा तिब्बतमा भारतीय बौद्ध संस्कृतिभाषामा रहेका बौद्ध धर्मको कालचक्र तन्त्रको अनुवाद तिब्बतीभाषामा भए देखिको तिब्बती पात्रो भारतीय खगोल तथा ज्योतिषशास्त्र अनुसार पात्रो निर्माण हुन थालेको तथा भारतको हिमालचल प्रदेशको खुनुका महायानी बौद्धहरुले आज सम्म पनि खुनुअी दाथो तथा खुनुअी लोथोको शास्त्रीय संस्कृत तिब्बती शास्त्रीयभाषामा तिब्बती पात्रो निर्माण गरी प्रयोग हुँदै आइरहेको छ। यस खुन् लाथो तथा दाथोमा तत्वीय र गणीतीय दुबै खाले ज्योतिषीय संयोजन रहेको पाईन्छ। सन १०२७ देखि आज सम्म पनि यो दाथो (पात्रो)मा होर दावा सुम्पा अर्थात् तिब्बती चौथों महिना बाटमात्रै वर्षको पहिलो महिनाको गणना गरिएको हुन्छ।

त्यसकारण तत्वीय नयाँवर्ष उत्सव ल्होछार/लोसार नेपालमा मात्र नभएर यो अन्तराष्ट्रिय रूपमा नै मनाउने उत्सव हो। तसर्थ नेपालको सेर्पा, सीङसा, लोमी, भुटीया, भुटानी, लगायत चीनीया तिब्बती भाषाको नयाँ वर्षलाई बुझाउने लोसार र नेपालको तामाङ तथा गुरुङभाषाको ल्होछार अनि चीनिया हान भाषाको सिनीयन युवान शब्दले तत्वीय खगोलसास्त्रमा आधारित सम्बत्/वर्ष/साल फेरिने दिन अर्थात् नयाँवर्ष उत्सव तत्वीय नयाँवर्ष तथा युवान दिन वा बसन्त उत्सव (स्प्रीङ फेस्टीभल) पनि एकै हो।

यसै गरी चन्द्रमास परम्पराको मलमास अर्थात् अधिकमास गणनाको परम्पराको इतिहासले पनि तत्वीय सम्बत् प्रयोगको प्राचीनतालाई पुष्टि गर्दछ।

नेपालमा यसको प्राचीनताको कुरा गर्नु पर्दा अंशुबर्माको समयको चाँगुनारायणको छत्रमा उल्लेख भएको पुस महिनामा अधिकमास जोडने पात्रो परम्परा नेपालको तामाङ जातिको तत्वीय सम्बत्‌को पात्रो परम्पराको कुरो र चिनिया तत्वीय चन्द्रपात्रो परम्परासँग पनि मेल खान्छ। यो परम्परामा अन्तिम महिना बाहौं चन्द्र महिना (तामाङ तापा-ला अर्थात् पौष चन्द्र महिना) पछि चन्द्र अधिकमास (तामाङ अधिक मास तापा-ग्रेन-ला) जोडिने परम्परा छ जो आज पनि पाइन्छ। यसै गरी चिनिया परम्परामा पनि आजसम्म यही परम्परा चलि आएको पाइन्छ।

यसरी पुरातात्वीक महत्वका बौद्ध स्मारकहरूको नामाकरण तत्वीय सम्वत्को प्रयोग गरिआएको लगायत अन्य थुप्रै तथ्यहरुले नेपालमा ल्होकोर/लोकोर 'वर्षचक्र' तत्वीय सम्वत् ऐतिहासिककाल देखि आजसम्म प्रयोग भइ आएको प्राचीन सम्वत् हो भन्ने कुरा सिद्ध हुन्छ। तसर्थ ल्होछार वा लोसार भनिने तत्वीय खगोलशास्त्र तथा ज्योतिषशास्त्र (इलमेन्टल एस्ट्रोनोमि एन्ड एस्ट्रोलोजि) पद्दत्तीको बाह्र जीव जन्तुहरुको नाममा रहेको तत्वीय बर्षहरु र खाम पाँच (पुरुष तथा स्त्री) तत्व युक्त खाम सँग कृयात्मक सम्वन्धका आधारमा गणना गर्ने बर्षचक्रको तत्वीय वर्ष (ल्हो वा लो) साल फेरिने अर्थात् यो एउटा अन्तराष्ट्रिय सम्वत् हो।



# अध्याय तीन
# तत्वीय सम्वत् ल्होकोरका आधारहरु

तत्वीय काल गणना परम्परामा आफ्नै विशेषता सहितको दृष्टिकोणबाट समग्र खगोल विज्ञानको अध्ययन गरिएको पाइन्छ। जस अनुसार नै समग्र तत्वीय सम्वत् प्रणाली तथा प्राचीन चिनिया प्राचिन तत्वीय खगोलशास्त्र तथा ज्योतिषशास्त्रको रचना भएको पाइन्छ। तत्वीय वर्ष/साल/सम्वत्का मुख्य आधारहरु निम्न छन्।

## ३.१ चन्द्र नयाँवर्ष

तत्वीय ल्हो वा लो सम्वत् प्रणालीमा पनि अन्य सम्वत्हरुमा झैं ३६५ दिनको एक सौर्यवर्ष तथा ३५४ दिनको एक चन्द्रवर्ष हुन्छ। तत्वीय सम्वत् र अङ्कको सम्वत्मा सम्वत् या वर्ष या सालहरुको नाम र प्रभावको अध्ययन गर्ने विधिमा भिन्नता हुन्छ। अङ्कमा आधारीत सम्वत् गणना गर्दा प्रत्येक सम्वत् या वर्ष या सालको नाम अङ्क मै हुन्छ (जस्तैः सन २०१०, २०११, २०१२)।

तर प्रत्येक तत्वीय सम्वत् वा वर्ष वा सालहरुको नाम अङ्कमा नभएर प्रत्येक सम्वत् या वर्ष या सालहरुको नाम निर्धारित बाह्र विभिन्न जीव तथा पन्छि संकेत चिन्हहरुद्वारा चिन्हित वा नामाकरण गरीएको हुन्छ (जस्तैः सन २०१० लाई तत्वीय सम्वत्मा लेख्दा भन्दा माटो-पुरुष-बाघ, त्यसरी नै सन २०११ लाई धातु-स्त्री-खरायो, सन २०१२ लाई पानी-पुरुष-ड्राओगन)। तत्वीय वर्ष/साल/सम्वत् फेरिंदा चन्द्रपात्रो अनुसार पहिलो चन्द्र महिनाको पहिलो दिन वर्षारम्भको दिन वा ल्होछार/लोसार 'नयाँवर्ष' प्रवेस गर्ने वा फेरीने दिन हो।

परम्परागत तत्वीय खगोलशास्त्रका आधार संसारभरका चीन, सींगापुर, मलेसिया, भेतनाम, लावोस, नेपाल, भारत, भुटान लगायत सबै देशहरुमा आज पनि चन्द्रमासकै आधारमा अन्तिम या बाह्रौं चन्द्रमास पछिको प्रथम चन्द्र महिनाको प्रथम दिन अर्थात् एक चन्द्रवर्ष पूराभई अर्को चन्द्रवर्ष वा नयाँ चन्द्रवर्ष आरम्भ हुने दिन मानिन्छ।

तसर्थ, तत्वीय वर्ष या सम्वत्को एक वर्षको अवधि एक चन्द्र वर्षको अवधि हो त्यसैले तत्वीय वर्ष फेरिने दिनलाई चन्द्र नयाँवर्ष ( Lunnar New

Year) पनि भनिन्छ। तत्वीय वर्ष या सम्वत्को मुख्यकाल गणनाको आधार वर्ष चन्द्रमास तथा चन्द्र वर्ष नै हो।

## ३.२ बसन्त उत्सव अर्थात् ऋतु परिवर्तन उत्सव

तत्वीय सम्वत्/वर्ष/सालको गणना मुख्य तथा पृथ्वीले सूर्यलाई परिक्रमा गर्दाको एक चक्रको कूल ३६० डिग्रिको २४ भाग वा सौर्य चरणहरुका ३-३ महिनाहरुको चार चरणमा हुने मुख्य चार ऋतुको परिवर्तनसंग यसको सम्वन्ध हुन्छ। भारतीय परम्परामा आधारित पात्रोहरुमा ऋतु परिवर्तनको यस २४ चरणहरुलाई २-२ महिनाको ६ भाग वा छ ऋतुहरुमा विभाजन गरेको हुन्छ।

यो चार ऋतु परिवर्तन मध्ये बसन्त ऋतु (Spring Season) तत्वीय सम्वत् अनुसारको चन्द्रवर्षको प्रथम चन्द्र महिनाको प्रथम दिन देखि आरम्भ हुन्छ। सूर्य उत्तरायण प्रवेश भए (Winter solstice) पछिको ऋतु परिवर्तन अर्थात् बसन्त ऋतुको प्रवेसको समयमा हुने भएकाले ऋतुपरिवर्तनको दिनसंग जोडेर तत्वीय सम्वत् अर्थात् ल्हो वा लो फेरिने दिनलाई बसन्त उत्सव (Spring Festival) भनिन्छ।

त्यसैगरी नेपालको तामाङ समुदायले यही तत्वीय वर्ष फेरिने दिनलाई ऋतु परिवर्तनसंग जोडेर यो महान पर्वको रुपमा मनाइने 'बसन्त उत्सव' लाई 'छारदीङ' भन्ने गरेको पाइन्छ।

## ३.३ ल्होकोर तत्वीय सम्वत्को एउटा अङ्ग खाम ज्युङ्वा ङा (पाँच तत्व)

तत्वीय सम्वत प्रणालीमा सृष्टिका सबै बस्तुहरु पांच प्रकारको शक्तिहरुवाट निर्मित तथा नियन्त्रित हुन्छ भन्ने सिद्धान्तको आधारमा पृथ्वीमा भएको पांच तत्वहरुद्वारा संकेत गरिएको हुन्छ। तत्वीय सम्वतका वर्षहरुको ऋतुविचार हुने प्रभाव तथा खगोलीय प्रणालीसंगको अध्ययन गरी यसको गतिशिलता, परिवर्तन तथा विकासमा आधारभूत प्रभाव गर्ने पाँच तत्वहरु क्रमस: १. काठ, २. आगो, ३. पृथ्वी, ४. धातु, ५. पानी निर्धारण गरिएको हुन्छ। यी खाम तत्वहरुले सौर मण्डलका बृहस्पति, मंगल, शनी, शुक्र, बुध आदि ग्रहहरुको प्रतिनिधित्व गरेको हुन्छ। चिनिया तथा तिब्बती बर्मनभाषाहरुमा खामलाई मो/फो, याव/युम, यीङ/याङको नामले जानिन्छ। प्रत्येक खाम तत्वको आफ्नो निश्चित आकार, रङ र दिशा, ऋतु, विचार, प्रभाव सूचक आदि निर्धारीत हुन्छ (खाम तालिकामा हेर्नु होस्)।

ऋतु परिवर्तन चक्र, राशी तथा तत्वीय लोकोर सम्वत् चक्र रेखाचित्र-१



### ३.३.१ खाम ज्युङ्बा ङ्ग (पाँच तत्व) को भूमिका

यी प्रत्येक खाम तत्वको स्त्री र पुरुष दुइ प्रभाव हुन्छ। यी खाम तत्वहरुलाई खगोलिय गणनामा स्त्री र पुरुष वा धनात्मक र ऋणात्मक गरी दस प्रकारका खाम तत्वीय प्रभावहरुको व्यवहारमा प्रयोग हुन्छ।

यी पाँच खाम तत्वहरुको व्यवहारलाई मुख्य रुपमा निर्माणात्मक र ध्वंसात्मक दुइखाले चक्रिय संयोजन वा सम्वन्धहरुमा विभाजन गरिएको हुन्छ। मुख्यतया खाम तत्वहरुको यो वर्गिकरणको महत्व खगोलिय गतिविधिहरुको व्यवहारिक प्रभावका सम्वन्धमा र तत्वीय ज्योतिषशास्त्रीय प्रयोग र अध्ययनमा महत्वपूर्ण भूमिका रहेको हुन्छ।

तालिका-१

| क्र.सं. | खाम तत्व | दिशा | रंग |
|---|---|---|---|
| १ | काठ (बायु) | पूर्व | हरियो |
| २ | आगो (ताप) | दक्षिण | रातो |
| ३ | पृथ्वी (माटो) | केन्द्र | पहेँलो |
| ४ | धातु (फलाम, गहना, सुन) | पश्चिम | सेतो |
| ५ | पानी (तरल, जल) | उत्तर | कालो |

### ३.३.२ खाम ज्युङ्बा ङ्ग (पाँच तत्व)का निर्माणात्मक सम्बन्ध चक्र

खाम पञ्च तत्वको दुइ महत्वपूर्ण चक्रिय सम्वन्धहरुमा निर्माणात्मक अर्थात् सृजनात्मक चक्रिय सम्वन्ध प्रणाली एक हो। यस निर्माणात्मक सम्वन्धीय चक्रमा अग्नी तत्वले (खरानी अर्थात् पृथ्वी (माटो) तत्वको निर्माण गर्छ, पृथ्वी तत्वले धातु (खनिज)तत्वको निर्माण गर्छ। धातु तत्वले जल (धातु तापबाट पग्लिए पछि) तरल तत्वको सृजना हुन्छ। जल तत्वले काष्ठ (रुख)तत्वको विकास गर्छ र यसरी नै काष्ठ (दाउरा) तत्वले आगो तत्वको सिजना गर्छ।

यसप्रकार खाम तत्वहरुको सृजनात्मक वा निर्माणात्मक एउटा व्यवहारिक खाम सम्वन्धि चक्रको तत्वीय ज्योतिषशास्त्रमा प्रयोग हुन्छ। तत्वीय ज्योतिषशास्त्रमा व्यक्तिहरुको मिल्न सक्ने, मिल्दा राम्रो हुने, असल समूह, सम्वन्ध आदिका प्रतिनिधित्व खाम सम्वन्ध चक्रले गर्दछ।

### ३.३.३ खाम ज्युङबा ङ्ग (पाँच तत्व)का ध्वंसात्मक सम्बन्धचक्र

खाम तत्वहरुको दोस्रो महत्वपूर्ण सम्वन्ध चक्र ध्वंसात्मक वा बेमेल सम्वन्ध चक्र हो। यस प्रकारको खाम तत्वहरुको सम्वन्ध चक्रमा पृथ्वी

(माटो) तत्वले जलतत्व प्रदुषण गर्ने, जल तत्वले अग्नि तत्वको दमन गर्ने, अग्नी तत्वले फलाम (धातु) तत्वलाई पगाल्छ, फलामतत्वले काष्ठ तत्वको काट्ने वा विनाश गर्ने र काठ तत्वले काठ (रुख)ले माटो (पृथ्वी) तत्व ध्वंस गर्दछ भन्ने अवधारणा रहेको हुन्छ । यसको प्रयोग तत्वीय खगोलशास्त्रीय अध्ययन तथा तत्वीय ज्योतिषशास्त्रमा एउटा व्यक्तिका अर्कोसँग नमिल्ने, मिल्दा राम्रो नहुने, सम्बन्ध दिगो नहुने, नराम्रो आदि सम्बन्धहरुको प्रतिनिधित्व यस खाम तत्वीय चक्रले गर्दछ । यी पाँच तत्व(खाम) संयोजनको आधारमा गणना गरिने १२ तत्वीय वर्षहरूको एउटा लोकोर (ल्होखोर्लो) वर्षचक्रको एउटा जीव वा तत्वीय वर्ष बाट अर्को जीव वा तत्वीय वर्ष फेरिंदा प्रत्येक तत्वीय वर्षसंगै पांच खाम तत्व मध्ये एउटा खाम तत्वले आफ्नो स्थान पुरुष वा स्त्री मध्ये एक प्रभाव सहित चक्रमा सम्बन्ध स्थापित गरेको हुन्छ । यहि खाम तत्व सहितको एक पूर्णतत्वीय वर्षचक्रले ६० वर्षचक्र डुष्च्युखोर्लो पुराभइ एक गाज्युङ लो सम्वतसर अर्थात् बृहस्पति वर्ष पुरा गर्ने भूमिका खेलेको हुन्छ ।

## १.४ ल्होकोर तत्वीय सम्वत्का प्रभाव तत्व याङ्ग तथा यीङ्ग

चीनीया मौलिक काल वा परिवर्तन जनाउने तत्वीय संकेत लाई श्री[10] भनिन्छ । परिवर्तनका वाहक यी तत्वहरुको सबैखाले सम्भाव्य योग तथा संयोजन दुई तत्वहरुमा विद्यमान रहेको हुन्छ त्यसलाई लियाङ्ग श्री अर्थात् दुई तत्वीय स्वरुप हरु जो ऋणात्मक सिद्धान्तलाई यीङ्ग र धनात्मक सिद्धान्तलाई याङ्ग भनिन्छ । तत्वीय वर्षको संकेत चित्रमा प्रस्तुत गर्दा ठोस धर्काले याङ्ग र बिचमा छिनेका धर्का चित्रले यिङ्ग लाई व्यक्त गर्ने गरिन्छ ।

रेखाचित्र-२



याङ्ग तथा यीङ्ग

यो तत्वीय दर्शनका यो दृष्टिकोण याङ्ग र यीङ्ग, चीनीया ताओवादका आधारभूत अवधारणा तथा चिनीया दर्शनशास्त्रको मार्गदर्शक सिद्धान्त हो । ताओवादी मुख्य ग्रन्थ कठीन रहित पुस्तक वा परिवर्त्य पुस्तक

---

१० श्री शब्दले तिब्बती बर्मन भाषा परिवारका भाषाहरुमा समय वा काल बुझाउँदछ । नेपालका नेवार भाषामा ती भनेको समय नै हो त्यसैगरी तामाङ, गुरुङ, योल्मो, मनाङका नन्यावतजी भाषा दुखी, दुमीखोर आदि शब्दहरु अर्थात् ती ले समय वा कालमाई नै बुझाउँछ ।

"The Book of Ease" or "The Book of Change ता ईचीत्सु शो का अनुसार ताओबाट उत्पत्ति भएको यिङ्गयाङ्गको सृष्टिका प्रत्येक बस्तुमा प्रभाव रहेको हुन्छ। साधारणतया यिङ्ग र याङ्गको अर्थ पुरुष (धनात्मक) र स्त्री (ऋणात्मक) हो। परिवर्तनको हरेक प्रकृयामा पाँच प्रकारका तत्वहरु जल, काष्ठ, आगो, पृथ्वी र फलाम (धातु) तत्वहरुको उत्पत्ति भएको हुन्छ। यी पाँच भौतिक तत्वहरुलाई 'ची' भनिन्छ। यिङ्ग र याङ्ग सृष्टिमा शान्ति कायम गराउन तथा सृष्टि सञ्चालन प्रकृयामा एक आपसमा पुरक तथा विपरित वा विरोधी तत्व मानिन्छ।

यीङ्ग अन्धकार र याङ्ग उज्यालो प्रकाश मानिन्छ। सकृय शक्तिहरुको परिपुरकका रुपमा सम्वन्ध बुझाउन यीङ तर्फको कालो भागमा सेतो बिन्दु र याङ्ग तर्फको सेतो भागमा कालो बिन्दु रहेको हुन्छ। यी थोप्लो वा सेतो र कालो थोप्लोले नै यिङ्गयाङ्ग दुवैलाई एकअर्कोमा आश्रित गराउँछ। यसका मुख्य अवधारणा अनुसार अन्धकार वीनाका प्रकास र जीवन वीनाको मृत्यु हुँदैन भन्ने हुन्छ। यिङ्ग र याङ्ग सिद्धान्त भौतिकवादी दृष्टिकोणले झै सृष्टिका हरेक बस्तुको परिवर्तनीय छ त्यो समय वा परिवर्तन अनिवार्य छ, त्यो धनात्मक र ऋणात्मक संयोजनवाट मात्र सम्भव हुन्छ। जहिले पनि याङ्ग सेतो भाग प्रकासमय माथ्लो तर्फ तापका प्रतिक र कालो भाग अन्धकारमय र तल्लो तर्फ तथा ठंडीका प्रतिकका रुपमा यीङ्ग रहेको हुन्छ।

**तालिका-२**

| याङ्ग र यीङ्ग तथा तत्वीय वर्षहरुको सम्वन्ध | | | | | | |
|---|---|---|---|---|---|---|
| याङ्ग र यीङ्ग | बिजोर (पुरुष) तथा जोर (स्त्री) अंकमा रहने तत्वीय वर्षहरु | | | | | |
| याङ्ग (पुरुष) | (१) मुसा Rat | (३) बाघ Tiger | (५) ड्राइगन Dragon | (७) घोडा Horse | (९) बाँदर Monkey | (११) कुकुर Dog |
| यीङ्ग (स्त्री) | (२) गोरु Ox | (४) खरायो Rabbit | (६) सर्प Snake | (८) भेंडा Sheep | (१०) चरा Bird | (१२) बँदेल Pig |

**तालिका-३**

| यिङ्ग र याङ्गका आधारभूत अवधारणा |
|---|
| १. आकास र धर्ती, २. सेतो र कालो, ३. गर्मी र जाडो, ४. नरम र कडा, ५. बाघ र ड्राइगन, ६. कार्यकर्ता र नेता, ७. छाँया र घाम, ८. नकारात्मक र सकारात्मक, ९. तल र माथि, १०. उत्तर र दक्षिण, ११. बसन्त र वर्षाद, १२. पानी र आगो, १३. नारी र पुरुष, १४. दिन र रात, १५. बर्ग र बृत्त, १६. पदार्थ र शक्ति, १७. धनात्मक र ऋणात्मक, १८. रीत्तो र भरिलो १९. बिजोर र जोर अंक |

परम्परा अनुसार तत्वीय वर्ष चक्रका बिजोर संख्यामा रहेका तत्वीय वर्षहरु सबै याङ हुन्छन् भने जोर संख्यामा रहेका तत्वीय वर्ष चक्रका तत्वीय वर्ष सबैजसो यीङ हुन् ।

त्यसैले याङ र यीङ अर्थात् पुरुष र स्त्री वा धनात्मक र ऋणात्मक प्रभाव र प्रयोगका बारे यसका माथिको तालिकामा उल्लेखित आधारभूत अवधारणाहरुको तत्वीय खगोलशास्त्रीय अध्ययन तथा तत्वीय ज्योतिषशास्त्रको व्यवहारिक प्रयोगका रुपमा व्यक्तिको व्यक्तित्व, आचरण, व्यवहार, प्रवृत्ति आदिको निर्धारणमा महत्वपूर्ण भूमिका रहेको हुन्छ ।

## १.५ राब्ज्युङलो वा बृहस्पति वर्षचक्र वा सम्वतसर

तत्वीय खगोलशास्त्रको सम्वत् या वर्षको अर्को आधार राब्ज्युङ लो हो । यो तत्वीय लोकोर च्युङ्नी बाह्रवर्षे चक्रका वर्षहरु र ज्युङ्वा ङा अर्थात् यी पाँच तत्वहरुको पुरुष तथा स्त्री प्रभावसंगको संयोजनका आधारमा निर्धारण हुन्छ ।

भारतीय तथा ग्रेगोरियन काल गणनामा भने यसलाई बृहस्पति ग्रह र राशीको संयोजनको आधारमा गणना गरिने भएकाले यो साठी वर्षे वर्षचक्रलाई सम्वतसर तथा बृहस्पति वर्ष भनिन्छ । प्रत्येक सम्वत्सर वर्षको अलग्गै नामाकरण गरिएको हुन्छ । भने चिनियाहरु यसलाई यो साठी वर्षको एउटा चक्र पूराभए पछि पुन तत्वीय वर्षचक्र कै भैं फेरिन्छ । बृहस्पति वर्ष चक्रको परम्परालाई हेर्दा पनि प्रारम्भमा तत्वीय नै थियो भन्ने पनि पुष्टि हुन्छ । यो काल गणना पद्धतीमा एक वर्षचक्र साठी वर्षको हुने भएकाले यसलाई दुच्यु लोकोर 'साठीवर्षेचक्र' पनि भनिन्छ (हेनुहोस तालिका-४) ।

चिनिया साठी वर्षे ल्होकोर शाङ राज्यकालमा नै प्रयोगमा रहेको तथ्य इसा पूर्व दोश्रो सहशताब्दीको हाडमा कुँदिएको अभिलेख भेटिएको थियो । यस प्रणालीलाई इसापूर्व २२०- इस्वि सन ८ कालमा पश्चिमि हान राज्यकालमा व्यापक रुपमा फैलिएको कुरा चिनिया खगोलशास्त्रीय इतिहासमा उल्लेख छ । आजभोलि ८७ औं चिनिया साठीवर्षे चक्र राब्ज्युङ ल्होकोर चलिरहेको छ । चिनिया राब्ल्होकोरको प्रथम वर्ष काठ पुरुष मुसा र साठीऔं वर्षमा पानी स्त्री बंदिल वर्ष रहेको हुन्छ । यो काठ पुरुष मुसा वर्ष तदनुसार सन १९८४ मा आरम्भ भएको थियो । सन २०४३ मा समाप्त भइ २०४४ देखि ८८ औं चिनिया राब्ज्युङ ल्होकोर आरम्भ हुनेछ । चिन, जापान, कोरिया भेतनाम लगायतमा आफू जन्मेको ल्होबाट साठी वर्ष पूरा भएपछि ६१ औं

प्रवेश वर्ष अर्थात् राव्ज्युङ ल्होछारको अवसरमा पनि उत्सव मनाउने गरिन्छ । यस साठी वर्ष पूरा भई ६१ आरम्भको उत्सवलाई लिचुन भनिन्छ भने जापनीहरु किनोअे-नो भनेर शुभ असुभ हुने कुरामा विश्वास गर्दछन् ।

यो राव्ज्युङ ल्होकोर तिब्बतमा पहिलोपटक संस्कृतभाषामा रहेको कालचक्र तन्त्रको अनुवाद सँगै यो अग्नी-खरायो वर्ष तदनुसार ईस्वी सन १०२७ देखि मात्र प्रयोगमा आएको थियो । सन १०२७ लाई पहिलो सम्वतसर वर्ष अर्थात् राव्ज्युङ लो १ बाट गणना गरेर सन १९८७ मा १७ औं सम्वत्सर पूरा भइसकेको छ । सन २०४७ मा १८ औं राव्ज्युङ ल्हो सम्वत्सर वर्ष पूरा हुनेछ ।

## ३.६ पार्ख (ऋतु परिवर्तनका तत्वीय संकेत अष्टकोण वा दिशाहरु)

पृथ्वीले सूर्यको परिक्रमा गर्दा जुन बक्ररेखा या अरबिट बन्दछ त्यस बक्ररेखाले निर्माण गरेको चार ऋतु परिवर्तनका मुख्य बिन्दुहरुको प्रतिनिधित्व गर्ने दिशाहरुमा याङ्ग (+) र यीङ्ग (-) का विभिन्न ऋतु परिवर्तन प्रकृयालाई प्रतिनिधित्व गर्ने तत्वीय प्रणाली नै पार्ख हो ।

ऋतु परिवर्तन चक्रमा याङ्ग र यीङ्गको प्रभावका आधारमा ऋतु परिवर्तनलाई तत्वीय आधारमा विभिन्न ऋतुहरुलाई क्रमसः (१) यीङ्ग र यीङ्गले शीतकाल वा जाडो ऋतु तथा उत्तरदिशा, (२) याङ्ग र याङ्गले ग्रीष्म ऋतु तथा दक्षिण दिशा, (३) याङ्ग र यीङ्गले शरद ऋतु तथा पश्चिम दिशा, र (४) यीङ्ग र याङ्गले वसन्त ऋतु तथा पूर्वदिशाको संकेत गर्दछ ।

यी प्रत्येक दिशा र ऋतुको बीचमा थप दिशा तथा ऋतुको समेत संयोजन गर्दा ३६० डिग्रीको सिंगो अरबिटको आठकोणहरु अर्थात् अष्ट दिशाहरुलाई नै पार्ख भनिन्छ । तसर्थ तत्वीय सम्वतको प्रयोगका दृष्टिले पार्ख एउटा महत्वपूर्ण अवयव हो अष्ट भूज या अष्टकोण अर्थात पार्ख लाई चिनिया पा क्वा (Kwa) भनिन्छ । चिनियाहरुले प्रत्येक क्वाहरुको अलग अलग नामाकरण गरेको पाइन्छ (हेर्नुहोस् तालिका ४)।

यो परम्परा चिनमा तेह्र पित बादशाहहरु मध्ये इ.पू. २५९७-२६९७ को तेस्रो पित बादशाहको (Yellow Empire) कालमा चोउका यी राजाको कालमा नै दुइ खाले क्वा तत्वीय ऋतु परिवर्तनका बिन्दुहरुलाई संकेत गर्ने दिशाहरुको व्यवहारिक रुपमा प्रयोगमा ल्याएको मानिन्छ, त्यसै फुहाइ अर्थात् फूशीको मिथक अनुसार पनि ताइ हो महान आकाशिय बादशाह इ.पू. २८५२ देखि २७३८ ताका नै प्रचलनमा रहेको चिनीया रेकर्डमा पाइन्छ (CARUS, 1989)।

प्रवेश वर्ष अर्थात् राब्ज्युङ ल्होछारको अवसरमा पनि उत्सव मनाउने गरिन्छ। यस साठी वर्ष पूरा भई ६१ आरम्भको उत्सवलाई लिचुन भनिन्छ भने जापनीहरु किनोअे-नो भनेर शुभ असुभ हुने कुरामा विश्वास गर्दछन्।

यो राब्ज्युङ ल्होकोर तिब्बतमा पहिलोपटक संस्कृतभाषामा रहेको कालचक्र तन्त्रको अनुवाद सँगै यो अग्नी-खरायो वर्ष तदनुसार ईस्वी सन १०२७ देखि मात्र प्रयोगमा आएको थियो। सन १०२७ लाई पहिलो सम्वतसर वर्ष अर्थात् राब्ज्युङ लो १ बाट गणना गरेर सन १९८७ मा १७ औं सम्वत्सर पूरा भइसकेको छ। सन २०४७ मा १८ औं राब्ज्युङ ल्हो सम्वत्सर वर्ष पूरा हुनेछ।

## ३.६ पार्ख (ऋतु परिवर्तनका तत्वीय संकेत अष्टकोण वा दिशाहरु)

पृथ्वीले सूर्यको परिक्रमा गर्दा जुन वक्ररेखा या अरबिट बन्दछ त्यस वक्ररेखाले निर्माण गरेको चार ऋतु परिवर्तनका मुख्य विन्दुहरुको प्रतिनिधित्व गर्ने दिशाहरुमा याङ्ग (+) र यीङ्ग (-) का विभिन्न ऋतु परिवर्तन प्रकृयालाई प्रतिनिधित्व गर्ने तत्वीय प्रणाली नै पार्ख हो।

ऋतु परिवर्तन चक्रमा याङ्ग र यीङ्गको प्रभावका आधारमा ऋतु परिवर्तनलाई तत्वीय आधारमा विभिन्न ऋतुहरुलाई क्रमस: (१) यीङ्ग र यीङ्गले शीतकाल वा जाडो ऋतु तथा उत्तरदिशा, (२) याङ्ग र याङ्गले ग्रीष्म ऋतु तथा दक्षिण दिशा, (३) याङ्ग र यीङ्गले शरद ऋतु तथा पश्चिम दिशा, र (४) यीङ्ग र याङ्गले वसन्त ऋतु तथा पूर्वदिशाको संकेत गर्दछ।

यी प्रत्येक दिशा र ऋतुको बीचमा थप दिशा तथा ऋतुको समेत संयोजन गर्दा ३६० डिग्रीको सिंगो अरबिटको आठकोणहरु अर्थात् अष्ट दिशाहरुलाई नै पार्ख भनिन्छ। तसर्थ तत्वीय सम्वतको प्रयोगका दृष्टिले पार्ख एउटा महत्वपूर्ण अवयव हो अष्ट भूज या अष्टकोण अर्थात पार्ख लाई चिनिया पा क्वा (Kwa) भनिन्छ। चिनियाहरुले प्रत्येक क्वाहरुको अलग अलग नामाकरण गरेको पाइन्छ (हेर्नुहोस् तालिका ४)।

यो परम्परा चिनमा तेह्र पित बादशाहहरु मध्ये इ.पू. २५९७-२६९७ को तेस्रो पित बादशाहको (Yellow Empire) कालमा चोअुका यी राजाको कालमा नै दुइ खाले क्वा तत्वीय ऋतु परिवर्तनका विन्दुहरुलाई संकेत गर्ने दिशाहरुको व्यवहारिक रुपमा प्रयोगमा ल्याएको मानिन्छ, त्यसै फुहाइ अर्थात् फूशीको मिथक अनुसार पनि ताइ हो महान आकाशिय बादशाह इ.पू. २८५२ देखि २७३८ ताका नै प्रचलनमा रहेको चिनीया रेकर्डमा पाइन्छ (CARUS, 1989)।

# (तत्वीय खगोलशास्त्रको अतित स्वर्गीय पार्श्व चक्र (क्वा)

| पार्श्व (क्वा) चिन्ह | पार्श्व (क्वा) नाम | मेवा पार्श्व | पार्श्व क्वा दिशा | प्रतिक | तत्व | व्यक्ति | गुण | रंग | शरिरको अंग | ऋतु |
|---|---|---|---|---|---|---|---|---|---|---|
| ☰ | ch'ien | ६ | वायव्य | स्वर्ग | धातु | पिता | विद्वान | सेतो | मस्तिष्क | प्रारम्भिक शिशिर |
| ☷ | Tul | २ | नैऋत्य | पृथ्वी | पृथ्वी | माता | पोषण | पहेलो | पेट | प्रारम्भिक शरद |
| ☳ | Li | ३ | पूर्व | गर्जन | काष्ठ | जेष्ठ पुत्र | गति, मार्ग | हरीयो | खुट्टा | वसन्त |
| ☵ | chan | १ | उत्तर | जल | जल | माहिलो पुत्र | चक्र, भय | कालो | कान | शिशिर |
| ☶ | sun | ८ | ईशान | पर्वत | पृथ्वी | कान्छो पुत्र | अवरोध | सेतो | हात | प्रारम्भिक वसन्त |
| ☴ | k'an | ४ | आग्नेय | वायु | काष्ठ | जेष्ठ पुत्री | व्यापार, विकास | हरीयो | नितम्ब | प्रारम्भिक ग्रीष्म |
| ☲ | kan | ९ | दक्षिण | अग्नी | अग्नी | महिली पुत्री | अग्नी | रातो | आँखा | ग्रीष्म |
| ☱ | kw'un | ७ | पश्चिम | सरोवर | धातु | कान्छी पुत्री | हर्ष | सेतो | मुख | शरद |

*Source: Chinese Astrology Early Chinese Occultism byPaul Carus & Feng Shui (A book of Vastu) by Amal Choubey*

# ह्राब्ज्युङ ल्होकोर (डुप्च्यु खोर्लो) तत्वीय सम्वत्सर

चित्र-३



साभार : डेभिड स्नेल ग्रोभको फोर लामाज अफ डोल्पो, पुस्तकबाट

| एक राब्जुङ लो/हुन्युलोकोर 'साठी वर्ष सम्बत्सर'को लो तथा खाम | | | | |
|---|---|---|---|---|
| क्र.सं | गिनिगा ८७ औ सम्वतसरका वर्षहरू | खसभाषामा | शास्त्रीय तिब्बती भाषामा | अंग्रेजि भाषामा |
| १ | Feb 021984- Feb 19 1985 | काठ पुरुष मुसा | ཤིང་ཕོ་བྱི་བ་ | Yang Wood Rat |
| २ | Feb 201985- Feb 08 1986 | काठ स्त्री गोरु | ཤིང་མོ་གླང་ | Yin Wood Ox |
| ३ | Feb 011986-Jan 28 1987 | अग्नी पुरुष बाघ | མེ་ཕོ་སྟག་ | Yang Fire Tiger |
| ४ | Jan 291987-Feb 16 1988 | अग्नी स्त्री खरायो | མེ་མོ་ཡོས་ | Yin Fire Rabbit |
| ५ | Feb 171988-Feb 05 1989 | माटो पुरुष ड्रागन | ས་ཕོ་འབྲུག་ | Yang Earth Dragon |
| ६ | Feb 061989-Jan 26 1990 | माटो स्त्री सर्प | ས་མོ་སྦྲུལ་ | Yin Earth Snake |
| ७ | Jan 271990-Feb 14 1991 | धातु पुरुष घोडा | ལྕགས་ཕོ་རྟ་ | Yang Metal Horse |
| ८ | Feb 151991-Feb 03 1992 | धातु स्त्री भेडा | ལྕགས་མོ་ལུག་ | Yin Metal Sheep |
| ९ | Feb 041992-Jan 22 1993 | पानी पुरुष बाँदर | ཆུ་ཕོ་སྤྲེལ་ | Yang Water Monkey |
| १० | Jan 231993- Feb 09 1994 | पानी स्त्री चरा | ཆུ་མོ་བྱ་ | Yin Water Bird |
| ११ | Feb 101994-Jan 30 1995 | काठ पुरुष कुकुर | ཤིང་ཕོ་ཁྱི་ | Yang Wood Dog |
| १२ | Jan 311995-Feb 18 1996 | काठ स्त्री बनेल | ཤིང་མོ་ཕག་ | Yin Wood Pig |
| १३ | Feb 191996-Feb 06 1997 | अग्नी पुरुष खरायो | མེ་ཕོ་བྱི་བ་ | Yang Fire Rat |
| १४ | Feb 071997-Jan 27 1998 | अग्नी स्त्री गोरु | མེ་མོ་གླང་ | Yin Fire Ox |
| १५ | Jan 281998-Feb 15 1999 | माटो पुरुष बाघ | ས་ཕོ་སྟག་ | Yang Earth Tiger |
| १६ | Feb 161999-Feb 04 2000 | माटो स्त्री खरायो | ས་མོ་ཡོས་ | Yin Earth Rabbit |
| १७ | Feb 052000-Jan 23 2001 | धातु पुरुष ड्रागन | ལྕགས་ཕོ་འབྲུག་ | Yang Metal Dragon |
| १८ | Jan 242001-Feb 11 2002 | धातु स्त्रीसर्प | ལྕགས་མོ་སྦྲུལ་ | Yin Metal Snake |
| १९ | Feb 122002-Jan 31 2003 | पानी पुरुष घोडा | ཆུ་ཕོ་རྟ་ | Yang Water Horse |
| २० | Feb 012003-Jan 21 2004 | पानी स्त्री भेडा | ཆུ་མོ་ལུག་ | Yin Water Sheep |
| २१ | Jan 222004-Feb 08 2005 | काठ पुरुष बाँदर | ཤིང་ཕོ་སྤྲེལ་ | Yang Wood Monkey |
| २२ | Feb 092005-Jan 28 2006 | काठ स्त्री चरा | ཤིང་མོ་བྱ་ | Yin Wood Bird |
| २३ | Jan 292006-Feb 17 2007 | अग्नी पुरुष कुकुर | མེ་ཕོ་ཁྱི་ | Yang Fire Dog |
| २४ | Feb 182007-Feb 06 2008 | अग्नी स्त्री बनेल | མེ་མོ་ཕག་ | Yin Fire Pig |
| २५ | Feb 072008-Jan 25 2009 | माटो पुरुष मुसा | ས་ཕོ་བྱི་བ་ | Yang Earth Rat |
| २६ | Jan 262009-Feb 13 2010 | माटो स्त्री गोरु | ས་མོ་གླང་ | Yin Earth Ox |
| २७ | Feb 142010-Feb 02 2011 | धातु पुरुष बाघ | ལྕགས་ཕོ་སྟག་ | Yang Metal Tiger |
| २८ | Feb 03 2011-Jan 22 2012 | धातु स्त्री खरायो | ལྕགས་མོ་ཡོས་ | Yin Metal Rabbit |

| | | | | |
|---|---|---|---|---|
| २९ | Jan 23 2012–Feb 09 2013 | पानी पुरुष ड्रागन | ཆུ་ཕོ་འབྲུག་ | Yang Water Dragon |
| ३० | Feb 102013–Jan 30 2014 | पानी स्त्रीसर्प | ཆུ་མོ་སྦྲུལ་ | Yin Water Snake |
| ३१ | Jan 312014–Feb 18 2015 | काठ पुरुष घोडा | ཤིང་ཕོ་རྟ་ | Yang Wood Horse |
| ३२ | Feb 192015–Feb 07 2016 | काठ स्त्री भेडा | ཤིང་མོ་ལུག་ | Yin Wood Sheep |
| ३३ | Feb 082016–Jan 27 2017 | अग्नी पुरुष बाँदर | མེ་ཕོ་སྤྲེལ་ | Yang Fire Monkey |
| ३४ | Jan 282017–Feb 18 2018 | अग्नी स्त्री चरा | མེ་མོ་བྱ་ | Yin Fire Bird |
| ३५ | Feb 192018–Feb 04 2019 | माटो पुरुष कुकुर | ས་ཕོ་ཁྱི་ | Yang Earth Dog |
| ३६ | Feb 052019–Jan 24 2020 | माटो स्त्री बँदेल | ས་མོ་ཕག་ | Yin Earth Pig |
| ३७ | Jan 252020–Feb. 11 2021 | धातु पुरुष मुसा | ལྕགས་ཕོ་བྱི་བ་ | Yang Metal Rat |
| ३८ | Feb 122021–Jan 31 2022 | धातु स्त्री गोरु | ལྕགས་མོ་གླང་ | Yin Metal Ox |
| ३९ | Feb 012022–Jan 21 2023 | पानी पुरुष बाघ | ཆུ་ཕོ་སྟག་ | Yang Water Tiger |
| ४० | Jan 222023–Feb 09 2024 | पानी स्त्री खरायो | ཆུ་མོ་ཡོས་ | Yin Water Rabbit |
| ४१ | Feb 102024–Jan 28 2025 | काठ पुरुष ड्रागन | ཤིང་ཕོ་འབྲུག་ | Yang Wood Dragon |
| ४२ | Jan 292025–Feb 16 2026 | काठ स्त्री सर्प | ཤིང་མོ་སྦྲུལ་ | Yin Wood Snake |
| ४३ | Feb 172026–Feb 05 2027 | अग्नी पुरुष घोडा | མེ་ཕོ་རྟ་ | Yang Fire Horse |
| ४४ | Feb 062027–Jan 25 2028 | अग्नी स्त्री भेडा | མེ་མོ་ལུག་ | Yin Fire Sheep |
| ४५ | Jan 262028–Feb 12 2029 | माटो पुरुष बाँदर | ས་ཕོ་སྤྲེལ་ | Yang Earth Monkey |
| ४६ | Feb 132029–Feb 02 2030 | माटो स्त्री पुरुष | ས་མོ་བྱ་ | Yin Earth Chicken |
| ४७ | Feb 032030–Jan 22 2031 | धातु पुरुष कुकुर | ལྕགས་ཕོ་ཁྱི་ | Yang Metal Dog |
| ४८ | Jan 232031–Feb 10 2032 | धातु स्त्री बँदेल | ལྕགས་མོ་ཕག་ | Yin Metal Pig |
| ४९ | Feb 112032–Jan 30 2033 | पानी पुरुष मुसा | ཆུ་ཕོ་བྱི་བ་ | Yang Water Rat |
| ५० | Jan 312033–Feb 18 2034 | पानी स्त्री गोरु | ཆུ་མོ་གླང་ | Yin Water Ox |
| ५१ | Feb 192034–Feb 07 2035 | काठ पुरुष बाघ | ཤིང་ཕོ་སྟག་ | Yang Wood Tiger |
| ५२ | Feb 082035–Jan 27 2036 | काठ स्त्री मुसा | ཤིང་མོ་ཡོས་ | Yin Wood Rabbit |
| ५३ | Jan 282036–Feb 14 2037 | अग्नी पुरुष ड्रागन | མེ་ཕོ་འབྲུག་ | Yang Fire Dragon |
| ५४ | Feb 152037–Feb 03 2038 | अग्नी स्त्री सर्प | མེ་མོ་སྦྲུལ་ | Yin Fire Snake |
| ५५ | Feb 042038–Jan 23 2039 | माटो पुरुष घोडा | ས་ཕོ་རྟ་ | Yang Earth Horse |
| ५६ | Jan 242039–Feb 11 2040 | माटो स्त्री भेडा | ས་མོ་ལུག་ | Yin Earth Sheep |
| ५७ | Feb 122040–Jan 31 2041 | धातु पुरुष बाँदर | ལྕགས་ཕོ་སྤྲེལ་ | Yang Metal Monkey |
| ५८ | Feb 012041–Jan 21 2042 | धातु स्त्री चरा | ལྕགས་མོ་བྱ་ | Yin Metal Bird |
| ५९ | Jan 222042–Feb 09 2043 | पानी पुरुष कुकुर | ཆུ་ཕོ་ཁྱི་ | Yang Water Dog |
| ६० | Feb 102043–Jan 29 2044 | पानी स्त्री बँदेल | ཆུ་མོ་ཕག་ | Yin Water Pig |

### १.७ मेवा-गु पा क्वा (लो सु) अष्टकोणीय अङ्कीय चतर्भुज

| | | |
|---|---|---|
| ४ | ९ | २ |
| ३ | ५ | ७ |
| ८ | १ | ६ |

नौ मेवाहरु

पार्खं या आठ दिशाहरुको चतुर्भुजमा अंक गणितीय प्रणाली एक जादुगरी वर्गाकारीय प्रस्तुतीलाई पार्ख या चीनीया भाषामा क्वा तथा लो शु । यी मेवा गु, क्वा या लो शु को मुख्यतया तत्वीय ज्योतिषशास्त्रमा महत्वपूर्ण भूमिका रहेको हुन्छ । यी मेवा गु अर्थात् लो सु नौ चतुर्भुजहरुको संयोजन प्रणाली मध्ये चीनमा करिव छ हजार वर्ष पहिले नै प्रयोगमा आइ सकेको बताइन्छ (चौबे, १९९९) । मेवाको सिद्धान्त अनुसार नौं वटा वर्गाकारहरुको केन्द्रमा मेवा अङ्क ५ रहेको हुन्छ यस मेवाको दिशा रहित स्वतन्त्र हुन्छ । यसको चारै तिर आठ दिशामा अन्य आठ वर्गाकारहरु अष्टकोणीय दिशामा रहेको हुन्छ । यस चर्तुभुजको विचमा मेवा अंक ५ को माथीतिर मेवा अङ्क ९ यसले दक्षिण दिशा, तलतिर अंक १ यसले उत्तर दिशा, बाँया तिर अङ्क ७ यसले पश्चिम दिशा र दाँया तिर अङ्क ३ यसले पूर्व दिशाको संकेत गर्दछ ।

यसैगरी मेवाको वर्गाकारको पूर्व दिशाका ३ अंकको माथि अंक ४ रहेको हुन्छ यसले आग्नेय दिशाको संकेत गर्दछ भने मुनी तिर मेवा अंक ८ ले ईशान दिशाको संकेत गर्दछ भने अर्को तर्फ पश्चिम दिशाको मेवा अंक ७ को माथि मेवा अंक २ हुन्छ यसले नैऋत्य दिशाको संकेत गर्दछ भने मुनितिरको मेवा अंक ६ ले वायव्य दिशाको संकेत गर्दछ । मेवाका अंकहरुको तत्वीय ज्योतिषशास्त्रमा विभिन्न राम्रा तथा नराम्रा समयहरुको निर्धारणमा महत्व रहेको हुन्छ। तसर्थ तत्वीय पात्रो प्रणालीमा मेवालाई पात्रोको केन्द्रमा संयोजन गरिएको हुन्छ ।

### १.८ काल मापनका तत्वीय इकाइहरु

तत्वीय खगोलशास्त्रका आधारमा काल वा समय मापन तथा निर्धारण विधि पुरानो हो । हालको जस्तो अंक गणितीय आधारमा साल वा बर्ष वा सम्वत्को गणना सुरु हुनु भन्दा पहिले तत्वीय आधारमा अर्थात चित्रात्मक तथा संकेतात्मक रुपमा चिन्हहरुवाट नै तोकिने वा निर्धारण गर्ने गरिएको आज सम्म पनि पाइन्छ । एक बर्ष, एक महिना, एक दिन, एक घण्टा, एक मिनेट, एक सेकेण्ड आदि कालका वृहत्तर देखि सानो इकाईहरु सम्मलाई मापन गर्ने बुझाउने विभिन्न लो, खाम, पार्ख तथा मेवाहरु नै तत्वीय काल मापनका इकाईहरु हुन् । जसलाई निम्नानुसार प्रस्तुत गरिन्छ ।

## ३.८.१ राब्ज्युङ ल्होकोर (तत्वीय सम्बत्सर वर्ष चक्र)

तत्वीय वर्ष चक्रका बाह्रवटा वर्ष बुझाउने वर्षका संकेतहरु र भाले तथा पोथी पाँच खाम (प्रभाव तत्व)हरुको संयोजनबाट बन्ने साठी वर्षे वर्षचक्रको एउटा पूर्ण वर्षचक्र नै तत्वीय सम्वतसर अर्थात् डुव्च्युखोर्लो '६० वर्षे वर्षचक्र' नै राबज्युङ ल्हो/लो अर्थात् हो । भारतीय परम्परा अनुसार 'सम्वत्सर' तथा यसलाई वृहस्पति वर्षचक्र (Jupiter Year Cycle) भनिन्छ ।

## ३.८.२ ल्हो वा लो तत्वीय वर्ष/साल/सम्वत्

नेपालका तिव्वती वर्मन भाषापरिवारका भाषाहरुमा ल्हो/लो शव्दले वर्ष/साल/सम्वत्/सम्वतसर वर्षलाई बुझाउछ । यहाँ तत्वीय वर्ष/साल/सम्वत्/सम्वतसर भन्नाले वर्ष वा साल वा सम्वत् वा सम्वतसरको गणना गर्दा गणितीय अङ्कको प्रयोग नगरी बिभिन्न जीव-जन्तु तथा पन्छीको नामबाट बाह्र वटा फरक-फरक वर्ष संकेतहरुको नामाकरण गरिएको हुन्छ । तत्वीय वर्षका संकेतहरु १२ वटा बिभिन्न जीवजन्तुहरु क्रमस: १. मुसा, २. गोरू, ३. बाघ, ४. खरायो, ५. ड्राइगन, ६. सर्प, ७. घोडा, ८. भेडा, ९. बाँदर, १०. चरा, ११. कुकुर, १२. बँदेल नामाकरण गरेको हुन्छ (हेर्नुहोस् तस्वीर-१) ।

**तालिका-६**

| तत्वीय वर्ष तथा समय चक्र | | | | | |
|---|---|---|---|---|---|
| क.सं. | खसभाषामा | शास्त्रीय भाषा | तामाङभाषामा | अंग्रेजि भाषामा | तत्वीय समय चक्र |
| १ | मुसा | བྱི་བ་ | इपाम्इद्, नाम्युङ | Rat | 11 p.m. to 1 a.m. |
| २ | गोरु | གླང་ | ग्लाव | Ox/Buffalo | 1 to 3 a.m. |
| ३ | बाघ | སྟག་ | च्यांन | Tiger | 3 to 5 a.m. |
| ४ | मुसा | ཡོས་ | खरा | Rabbit/Hare | 5 to 7 a.m. |
| ५ | ड्राओगन | འབྲུག་ | मपुछी | Dragon | 7 to 9 a.m. |
| ६ | सर्प | སྦྲུལ་ | सापुछी | Snake | 9 to 11 a.m. |
| ७ | घोड़ा | རྟ་ | ताव, ता | Horse | 11 a.m. to 1 p.m. |
| ८ | भेँडा | ལུག་ | ग्यु | Sheep/Goat | 1 to 3 p.m. |
| ९ | बांदर | སྤྲེལ་ | माकार, तीम्ड्यु | Monkey | 3 to 5 p.m. |
| १० | चरा | བྱ་ | नामे, इपाम्इपा | Chicken/Rooster | 5 to 7 p.m. |
| ११ | कुकुर | ཁྱི་ | नागी | Dog | 7 to 9 p.m. |
| १२ | वँदेल | ཕག་ | डोवा | Pig/Boar | 9 to 11 p.m. |

### १.८.१ ला/दा/दावा (तत्वीय महिना)

चन्द्रमा र पृथ्वीको गतिका आधारमा निर्धारित काल गणनाको वर्ष इकाइ पछिको महत्वपूर्ण इकाइ चन्द्रमास वा महिना हो। तत्वीय महिना पनि तत्वीय वर्षचक्रलाई बुझाउने संकेतहरुको आधारमा नै नामाकरण गरिएको हुन्छ। तत्वीय संकेत अनुसार तत्वीय वर्षको वर्षचक्रमा प्रथम वर्ष मुसा हो भने तत्वीय १२ महिनाको गणना गर्दा त्यही वर्षचक्रको प्रथम महिना डुक/ड्राओगन/गरुड अर्थात् मुपुखी हो (हेर्नुहोस तालिका-४)। तत्वीय महिनाको गणना प्राचिन मास गणना पद्दति मुख्यरुपमा चन्द्रमामा आधारित हुन्छ। आज प्रचलनमा रहेको तत्वीय वर्ष गणनाको परम्परामा वर्ष निर्धारणको मूल आधार चन्द्रमास गणना अनुसार नै गरिएको हुन्छ। त्यसकारण तत्वीय वर्षको नयाँवर्षलाई चन्द्रनयाँ वर्ष पनि भनिन्छ। किन भने तत्वीय वर्षको पहिलो दिन प्रथम चन्द्र महिनाको प्रथम दिन अर्थात् प्रथम चन्द्र महिनाको शुक्लपक्ष परेवा वा प्रतिपदाका दिनलाई नयाँवर्ष प्रवेशको दिन मानिएको पाइन्छ।

मास गणनाको यो परम्परा संसारमै सबैभन्दा पुरानो हो। आज पनि सांस्कृतिक रुपमा चन्द्रमासको दिन अर्थात् तीथी गणनाको परम्पराकै आधारमा

तालिका-७

| तत्वीय चन्द्र महिना, ऋतु तथा सौर महिनाको नाम | | | | | | |
|---|---|---|---|---|---|---|
| क्र.स. | तामाङ महिनाको नाम | तिब्बती वर्मन भाषामा | तत्वीय महिनाको नाम | अंग्रेजी | भारतीय | ऋतु |
| १ | थला | डुक | ड्रागन | Jan/Feb | माघ | हेमन्त |
| २ | घनेला | डुल | सर्प | Feb/March | फागुन | ग्रीष्म |
| ३ | नाम्ड्ला | ताग | घोडा | March/April | चैत्र | ग्रीष्म |
| ४ | दगुला | लुग | भेडा | April/May | वैशाख | ग्रीष्म |
| ५ | टोवाफेला | टे | बाँदर | May/June | जेठ | शरद |
| ६ | ग्याल्थोला | ज्या | चरा | June/July | असार | शरद |
| ७ | गोनेला | खी | कुकुर | July/Aug | साउन | शरद |
| ८ | थान्देला | फा | बँदेल | Aug/Sep | भदौ | शिशिर |
| ९ | म्रेनीडला | जीवा | मुसा | Sep/Oct | असोज | शिशिर |
| १० | सोकरासीला | लाङ | गोरु | Oct/Nov | कात्तिक | शिशिर |
| ११ | चोओतापाला | ता | बाघ | Nov/Dec | मङ्सीर | हेमन्त |
| १२ | तापाला | ग्योओी | खरायो | Dec/Jan | पुस | हेमन्त |
| स्रोत: राहुल सांकृत्यायन, २००३, तिब्बत में बौद्ध धर्म, पृष्ट:४२-४७ | | | | | | |

चाड तथा पर्वहरुको निर्धारण गरिन्छ। आज पनि प्रचलनमा रहेका प्राय सबैखाले सौर पात्रोहरुमा सौर महिनालाई बुझाउने मासनाम चन्द्रमालाई बुझाउने शब्दबाटै निर्माण भएको पाइन्छ। यस तथ्यले सौरमास भन्दा पहिले देखि नै चन्द्रमास परम्परा प्रचलनमा रहेको कुरा पुष्टि गर्दछ।

उदाहरणका लागि चिनिया 'सिननियन' अर्थात् युआन दिन चन्द्र नयाँवर्ष यहाँ युआनको युयेले चन्द्रमालाई बुझाउँछ। यसैगरी अङ्ग्रेजी चन्द्रमा बुझाउने शब्द मुन बाट ग्रेगोरियन पात्रोको मन्थ, तामाङसमुदायको पात्रोमा पनि चन्द्रमालाई बुझाउने लाडीशब्दबाट महिना बुझाउने 'ला', जापानीमा 'गाचुकी' नेपालको नेवारीको तिमिलाबाट 'ला', कोरियनहरुको चन्द्रनयाँ वर्षको प्रथम दिन 'सोलनल', आदि परम्पराहरुलाई हेर्दा महिना बुझाउने शब्द चन्द्रमालाई बुझाउने शब्दबाटै भएको पाइन्छ।

### ३.८.३.१ ला/दा/दावा ल्हाग (तत्वीय अधिकमास)

चन्द्रपात्रो परम्परामा चन्द्रमाको गतिलाई मुख्य आधार मानेर समयको निर्धारण गरिन्छ। चन्द्रमाले साधारणतया २९.५ दिनमा पृथ्वीको एक फन्को मारेको हुन्छ भन्ने सिद्धान्तका आधारमा १२ चन्द्रमासको १ चन्द्रवर्ष ३५४ दिनको एक चन्द्रवर्ष हुन्छ। पात्रोमा सौर एक वर्ष बराबरको ३६५ दिनको सौरमास अनुसार अपुग हुने ११ दिन प्रत्येक २.७ वर्षमा (11x2.7=29.7) अर्थात् ३० दिनको थप एक महिना जोडीन्छ र त्यो वर्षलाई अधिकमास वर्ष भनिन्छ। यो वर्ष ऋतु ढीलो आरम्भ हुन्छ। यस्ता ७ अधिकमासहरु १९ वर्षमा एउटा क्षेयमास वर्ष आउछ।

### ३.८.३.२ ला/दा/दावा च्याडना (तत्वीय क्षेयमास)

चन्द्रपात्रोमा कुनै एक चन्द्र महिनामा यदी दुइ संक्रान्तिहरु एकै महिनामा परेको अवस्थामा यस्तो महिना घटेको वा क्षयमास भनिन्छ।

## ३.९ औसी र पूर्णीमा

प्रत्येक चन्द्र महिनाको शुक्लपक्ष प्रतिपदा देखि पूर्णी सम्म र कृष्णपक्ष प्रतिपदा देखि औंसीसम्मका दिन गरी बिभाजन गरिएको हुन्छ। शुक्लपक्षको १५ औं

तीथी (छेपाङ्ग्या) पूर्णिमा याङ्ग (याव) हो भने कृष्णपक्षको १५ औं दिनलाई ३० औं तीथी अर्थात् औंसी यीङ्ग (युम) हो ।

## ३.१० तत्वीय दिन तथा समय चक्र

चन्द्रमासमा प्रत्येक २३.५९ घण्टालाई एक दिन मानिएको हुन्छ । यसको पनि १२ तत्वीय संकेत अनुसार एक दिनको समयलाई विभाजन गरिएको हुन्छ तालिका-४ मा हेर्नुहोस्) । तामाङ समुदायमा सात दिनलाई ङीसरे भनिन्छ । तामाङ सात दिन निम्न प्रकार रहेको छ ।

## ३.११ ज्युङ्ची (तत्वीय पात्रो/ज्योतिष)

तत्वीय खगोलशास्त्रको वर्ष, महिना, दिन, समय आदि गणना गर्ने परम्परालाई तामाङ सेर्पा, ह्योल्मो लगायत चीनिया तिव्वती भाषामा 'ज्युङची' तथा 'नाग्ची' भनिन्छ । नेपाल, मंगोलिया, चीन, सिंगापुर, मलाय, लावोस, भुटान,भारतको सिक्कीम, हीमालचल, लदाख तथा चीनिया तिव्वत आदि सम्पूर्ण भूभागमा ज्युङ्ची तत्वीय ज्योतिष शास्त्रको परम्परा अद्यापी चलि रहेको छ । यस परम्परामा गणितीय ज्योतिष परम्परासंग मेल खाने तर भिन्दै तत्वीय पद्दति पाँच तत्व युक्त खाम, ल्होकोर (लोकोर वा बाह्र जीव तत्व युक्त वर्षचक्र), मेवागु (एक देखि नौ अङ्कीय वर्गाकार) र पार्ख (अष्टकोण वा दिशा) तालिका आदि तत्वहरुले युक्त हुन्छ जसलाई थाङका चित्रको माध्यमले चित्रित गरिएको हुन्छ त्यसलाई स्हिपा खोर्लो भनिन्छ । यसको साथै ज्युङ्चीको प्रयोग मुख्य ज्योतिष विज्ञान तर्फ हुने गरेको पाइन्छ । यसैको आधारमा विवाह, चुडाकर्म, मृत्यु संस्कार आदिका निमित्त शुभ अशुभ साइतहरु निर्धारण गरिन्छ ।

तालिका-८

| ङीसरे (सात बारको नाम) | | | | |
|---|---|---|---|---|
| क.सं. | तामाङ बारको नाम | तिब्बती भाषामा | खस भाषामा बारको नाम | अंग्रेजी |
| १ | दीङीरे | ङीमा | आइतबार | Sunday |
| २ | साङीरे | दावा | सोमबार | Monday |
| ३ | मीरे | मीग्मार | मंगलबार | Tuesday |
| ४ | नारे | ल्हाक्पा | बुधबार | Wednesday |
| ५ | नाबेङरे/नाबेरे | फुर्बु | बिहीबार | Thursday |
| ६ | सुङरे | पेम्बा | शुक्रबार | Friday |
| ७ | कामे | पासाङ | शनिबार | Saturday |

## ल्होछार पर्वको उपलक्ष्यमा सांस्कृति झाकी सहितको र्‍याली

चित्र-४






# अध्याय चार
# तत्वीय सम्बत् ल्होकोरको ऐतिहासिकता

### ४.१ खगोलशास्त्रमा आधारित तत्वीय सम्बत ल्होकोरको उद्गम

नेपालमा रहेका सांस्कृतिक पर्वहरू मध्ये चन्द्र नयावर्ष ल्होछार(लोसार) सबै भन्दा पुरानो पर्व हो । किनभने, नेपालमा तामाङ, ह्योल्मो समुदायले मनाउने **ल्होछार (लोसार)** तथा मुस्ताङ, डोल्पा, मुगुमा मनाउने **रूङ** पर्व र चीनमा चिनियाहरूले मनाउने वसन्त उत्सव तथा परम्परागत 'सिननियन' युवान दिन चन्द्र नयावर्ष पर्व एकै दिनमा पर्ने यो मानव संस्कृतिको उदगम हालसम्म प्राप्त ऐतिहासिक तथ्यहरुको आधारमा चीनको पेकीङ मानव सभ्यतासँग जोडीएको पाइन्छ ।

चीनमा यो नयाँवर्ष मनाउने परम्परा आजभन्दा ४७०० वर्ष अघि सिया सामाज्यकालमा प्रचलनमा रहेको उल्लेख गरिएको पाइन्छ भने चीनको तत्वीय खगोल तथा ज्योतिषशास्त्रको इतिहास अझ त्यो भन्दा अघि ६ हजार वर्ष पुरानो पुरानो तथ्यहरु पाइन्छ ।

तसर्थ, नेपालमा यो ल्होछार लोसार वा चन्द्र नयाँवर्ष उत्सव मनाउने यो परम्परा हजारौं वर्ष देखि निरन्तर आजसम्म प्रयोगमा आइ रहेकाले यसलाई सबै भन्दा पुरानो मान्ने आधारहरु प्रसस्तै भेटिन्छ ।

"चिनिया प्राचिन 'स्हीया' साम्राज्य र बादशाहहरुले प्रचलनमा ल्याएको 'स्हीया' पात्रो परम्परा अनुसार पनि चिनिया चन्द्रवर्षको प्रथम चन्द्रमहिनाको प्रथम दिनलाई नयाँवर्ष आरम्भ मानिएको छ । यो परम्परा "ई.पू.२१००-१६०० मा प्रारम्भ भएको कुरा चिनिया चन्द्र नयाँवर्ष परम्पराको ईतिहासमा उल्लेख गरेको पाईन्छ र हजारौं वर्ष देखि हालसम्म निरन्तर चलिआएको छ[११] । यहि समयदेखि चिनियाहरु ऋतु परिवर्तनको वसन्त उत्सव अर्थात् 'स्प्रीङ्ग फेष्टीभल' पर्व मनाउँछन् ।

यस आधारमा तत्वीय खगोलशास्त्रमा आधारित काल गणना पद्दति चीनबाट आरम्भ भएको ऐतिहासिक तथ्य तथा अभिलेखहरुको आधारमा यो प्रणालीको उदगम चीनबाट भएको मानिन्छ ।

---

११ see page : 294; *China's Lunar Calendars and Main Holidays* Practical Chinese Elementry Course-I -1996
"...China's Lunar or Xia Calendar which is said to have come to existence as early as the Xia Dynasty (about 2100-1600 BC) has been used for several thousand years and is still in common use today........ The Spring festival this holiday falls on the first day of the first lunnar month it is most important festival in China......"

आज पनि चीनमा भेटिएका छ हजार वर्ष पहिलेका पुरातात्वीक अभिलेखहरु तथा चीनीया समुदायको बाहुल्यता र प्रभाव रहेको सबै एसियाली मुलुकहरुमा तथा दक्षिण एसियाका नेपाल, भारत, भूटानका आदिवासी समुदायमा रहेको तत्वीय खगोलशास्त्रमा आधारित सम्वत्का साल वा वर्ष वा सम्वत् फेरीने दिन र चीनीयाहरुको तत्वी सम्वत् फेरिने दिन एकै दिनमा पर्नुले पनि यो तत्वीय खगोलशास्त्रमा आधारित तत्वीय वर्षचक्र परम्परा एउटै हो र यसको प्रारम्भ तथा उद्गम चीनमा नै भएको हो भन्ने प्रसस्तआधारहरु पाइन्छ ।

## ४.२ चिनिया तिब्बतका तत्वीय सम्वत् ल्होकोरको ऐतिहासिकता

चिनिया तिब्वतमा चीनको तत्वीय खगोलशास्त्र तथा ज्योतिषशास्त्र ज्युङचीमा आधारित चन्द्र नयाँवर्ष परम्परा इसा पूर्वको दोश्रो शताव्दीका तत्कालिन तिब्वतका प्रथम राजा 'ङ्याखारि छेन्पो (gNya-khaTri-bsten-po-2nd centuary B.C.) को समयमा नै जनमानसमा प्रयोगमा आइ सकेको कुरा हालको चिनियाँ तिब्वतका खगोल तथा ज्योतिषशास्त्रीहरुले उल्लेख गरेको छ । तिब्वतमा भारतीय कालचक्र तन्त्रको प्रवेस हुनु भन्दा धेरै वर्ष पहिले नै मो र फो युक्त खाम अर्थात् पाँच भौतिक तत्वहरुको आधारमा ज्योतिष हेर्ने परम्परा थियो जो वोन धर्म तथा प्रकृति पूजकहरुको याब र युम 'सेतो र कालो' तान्त्रिक प्रणालीमा आधारित थियो, जसमा उनीहरुले प्राणी वली दिईन्थ्यो ।

तिब्वतमा पनि विभिन्न समयमा पटक-पटक गरेर हजारौं वर्ष अघि देखि चीनमा प्रयोग भइ राखेको ज्युङची 'तत्वीय खगोलशास्त्र' परम्परा चीनवाट प्रवेस भएको हुनाले यसलाई चिनिया तिब्वतीहरु नाग्ची (कालो खगोलशास्त्र तथा ज्योतिष शास्त्र) भन्दछन् । उनीहरुको तत्वीय सम्वत् गणना लोसार परम्परा यही नाग्चीमा आधारित छ ।

वास्तवमा चौथो शताव्दीमा चिनिया तिब्वतमा बौद्ध धर्मको प्रवेस आरम्भ भएको मानिन्छ र पछि सातौं शताव्दीमा चाहिं राज्यको तहवाट नै पूर्ण राजकिय सम्मान पाएको इतिहास छ । जसले गर्दा तिब्वतमा बुद्ध धर्म र हालको ज्योतिष तथा खगोल शास्त्रले पनि राजकिय रुपमा विकास हुने अवसर पाएको हो ।

त्यो भन्दा पहिले तिब्वतका राजा डामरी स्रोङचान (gNamri Srong bTsan) ले छैठौं शताव्दीमा चार जना प्रतिभाशाली विद्वानहरुलाई चीनमा ज्योतिष तथा खगोलशास्त्रको अध्ययन गर्न पठाएका थिए । यो क्रम पछि पनि

निरन्तर जारी रहेको देखिन्छ र सातौं शताब्दीका तिब्बती राजकुमारले विवाह गरेका पाँचौं रानी, चिनिया राजकुमारीले चीनबाट चिनिया पन्चाङ एवं खगोलशास्त्र र ज्योतिषशास्त्र ल्याएको कुरा इतिहासमा उल्लेख छ। (मेन-ची-खाङः७-८:-१९९५)। त्यसै चिनिया तत्वीय खगोलशास्त्रीय चिनिया परम्पराको प्रभावले तिब्बतमा खगोलशास्त्र तथा ज्योतिषशास्त्रमा नयाँ आयाम थपेको थियो।

त्यसरी नै सातौं शताब्दीमा तिब्बती राजा स्राङचान गाम्पो (rSong bTsan sGam Po) को पालामा पनि तिब्बतमा खगोल तथा ज्योतिषशास्त्रका द्रुतगतीमा विकास भएको थियो। यसले आठौं शताब्दीमा पुग्दा तिब्बतमा चिनीया तत्वीय ज्योतिषशास्त्रले 'स्वर्णयुग' GOLDEN AGE को रुपधारण गरी इतिहास कायम गरेको थियो।

## ४.२.१ चिनिया तिब्बतमा भारतीय कालचक्र तन्त्रको प्रवेश

तिब्बतमा नाग्चीको प्रयोग भन्दापछि मात्र अर्थात् अग्नी खरायो वर्ष तदनुसार सन १०२७ मा भारतबाट बौद्ध दर्शनमा आधारित कार्ची अर्थात् "श्रीकालाचक्र तन्त्र" को आधारभूत मुख्य तिनखण्डहरुको अनुवाद संस्कृत भाषाबाट तिब्बतीमा भएको थियो। जसमा तिन अध्यायहरु क्रमस: १. बाह्य, २. आन्तरीक र ३. वैकल्पिक कालचक्र तन्त्र को तिब्बतीमा अनुवाद भएको थियो।

यस भारतीय खगोल तथा ज्योतिषशास्त्रीय परम्परालाई आज तिब्बति परम्परामा 'कार्ची' सेतो खगोलशास्त्र तथा ज्योतिषशास्त्र भनिन्छ। तिब्बती पात्रो कार्चीमा आधारीत भएर निर्माण भए देखि तिब्बती पात्रो भारतीय पात्रो परम्परा अनुसार मंगोल वा तिब्बती तेश्रो महिना (होर या थोअी दावा सुम्पा) देखि वर्षको प्रारम्भ भएको पात्रो निर्माण भएको पाइन्छ। यो पात्रो परम्परा आजसम्म चलन-चल्तिमा तिब्बती पात्रो 'दाथो तथा लोथो' रुपमा प्रयोग भइ रहेको छ।

दशौं शताब्दी ताका नै तिब्बतमा सत्ता लुछाचुडीको कारण चरम विकास भइ सकेको खगोल तथा ज्योतिषशास्त्र लगायत अन्य थुपै क्षेत्रको विकास गतिमा शिथिल आयो यसको प्रभाव तिब्बतमा अग्नी खरायो वर्ष (सन् १०२७) मा प्रवेस पाएका अर्थात् भारतीय कालचक्र तन्त्रको तिब्बतीमा अनुवाद भइ प्रारम्भ भएको कार्चीमा आधारित खगोलशास्त्र तथा ज्योतिष परम्पराले पनि यस अवधिमा विकास तथा प्रचारप्रसार हुने अवसर पाएन

तर सत्रौं शताब्दीमा भने पाँचौं दलाई लामा 'डवाङ लोब्साङ ग्यासो'को समय देखिमात्र पून: कालचक्र तन्त्रको विकास तथा प्रसार हुने अवसर पाएको थियो । त्यसवेला देखि चनिया तिब्वतीहरुले नववर्ष उत्सव र धार्मिक कर्मकाण्डहरु आजपनि यहि कार्ची र नाग्ची युक्त तिब्वती चन्द्रपात्रो परम्परा कै आधारमा मनाउने गरिन्छ ।

यस तथ्यले तिब्यतमा दुइ प्रकारका पात्रो परम्पराको प्रचलन रहेको कुरा जनाउँछ । त्यसैले तिब्वतमा तत्वीय खगोलशास्त्रमा आधारित "ज्युङ ची (Elemental Astrology) अर्थात् नाग्ची र भारतीय कालचक्र तन्त्रमा आधारित "कार ची"(Astronomy) दुई प्रकारको परम्परा रहेको छ । जसले गर्दा आजको तिब्वती पात्रामो भारतीय चन्द्रसौर्य तथा ज्युङचीको संमिश्रण पाइन्छ । यी पात्रो परम्पराहरुबाट तिब्वतमा नाग्ची चीनबाट र कार्चीको भारत तथा पर्सीया, ग्रीस लगायतको देशहरुमा प्रचलित पात्रो परम्पराबाट आएको तिब्वती पात्रो अध्ययनले देखाउँछ ।

## ४.३ नेपालमा तत्वीय सम्वत् ल्होकोर

नेपालमा काठमाण्डौ उपत्यकाको प्राचीन बौद्ध स्मारक फाग्पा सीङगुन र ज्यारोङखास्योर छ्योर्तेन 'स्वयम्भू र बौद्ध स्तुपा' को सम्वत्संज्ञा अर्थात् तत्वीय सम्वत् संग जोडिएको नामाकरण तथा त्यहाँ अवस्थित तत्वीय ल्होकोर/लोकोर सम्वत्चक्र चित्रादि पुरातात्वीक प्रमाणका आधारमा प्राचीन काल देखि नै तत्वीय खगोलशास्त्रको वर्ष, महिना, दिन, समय चक्र गणना गर्ने तत्वीय पद्दति अर्थात् तत्वीय लोकोर परम्पराका ल्होछार(लोसार) 'नयाँवर्ष' उत्सव तत्वीय सम्वत्को नेपालमा प्रयोग भएको प्रमाण हो ।

त्यसैगरी चाँगुनारायण मन्दिरको छत्रमा उल्लेखित अंशुवर्मा कालको पुस महिनामा अधिकमास अर्थात् मलमास जोडने चन्द्रपात्रो परम्परा, आदित्य मल्लको १३७८ को अभिलेखमा र पुण्य मल्लको १३९४ आदि अभिलेखहरु आदिले नेपाल प्राचीनकाल देखिनै तत्वीय सम्वत्को प्रयोग भएको प्रसस्त प्रमाण वा तथ्यहरु पाइन्छ । यसैका आधारमा नेपालमा यो तत्वीय सम्वत् प्रणाली यहाँका आदिबासी जनजाति तामाङ, गुरुङ, मनाङबा, मुगाम्बा, योल्मोपा, दोल्बुपा, सीङसाबा, लोबा, थुदाम, शेर्पा, मुस्ताङी लगायत थुप्रै समुदायले हजारौं वर्ष देखि प्रयोग गर्दै आएको पाइन्छ ।

तसर्थ, ल्होछार वा लोसार उत्सव तथा पर्व विभिन्न बाह्र जीवजन्तुहरुको नाममा बाह्र वर्षलाई पाँच भौतिक तत्वहरुको आधार सृजना भइराखेको

तत्वीय वर्षचक्र परम्परामा आधारित वर्ष, महिना, दिन गणना गर्ने पौराणिक तत्वीय खगोलशास्त्र तथा ज्योतिषशास्त्र संग सम्बन्ध रहेको नेपालको परम्परा हो ।

यो परम्परा चिनिया चन्द्रपात्रोको परम्परा जति पुरानो छ त्यतिनै पुरानो हो अर्थात् नेपालमा नेपालको उच्च पहाडी हिमालय क्षेत्रमा बसोबास गर्ने सम्पूर्ण समुदायले कुनै न कुनै रुपमा मनाउने तत्वीय नयाँवर्ष ल्होछार वा लोसार पर्व चिनियाँ परम्परागत चन्द्र नयाँ वर्ष तथा स्प्रीङफेस्टीभलको सम्बन्ध पनि उत्तिकै पुरानो छ भन्दा अत्युक्ति पर्दैन ।

## ४.४ तत्वीय सम्वत् ल्होकोरको आदिवासी समुदायसँग सम्बन्ध

नेपालमा सम्पूर्ण उच्च हिमाली भूगोलका आदिवासी समुदायहरुको साझा खगोलीय तथा ज्यातिषशास्त्रीय अध्ययनको वैज्ञानिक कडी नै तत्वीय सम्वत् प्रणाली हो । तत्वीय सम्वतको आधारमा फेरिने नयाँवर्ष उत्सव पात्रो परम्पराका कारण फरक दिनमा या एक महिना फरक पारेर मनाउने गरिए पनि यीनीहरुको खगोली गणनाका सम्वत, महिना, दिन, तथा समयका इकाइहरुको योग तथा गणना विधि र संकेत चिन्हहरु एकै हो । अर्थात् खास गरेर प्रथम चन्द्र महिनाको प्रथम दिन नै ल्होछार वा लोसार र रुङ पर्व तत्वीय सम्वत्का आधारमा मनाउने गरिन्छ । यो चिनिया तत्वीय खगोलशास्त्रमा आधारित छ र चन्द्रपात्रो अनुसार तत्वीय संकेतहरुको आधारमा गणना गर्ने गरिन्छ ।

त्यसैले नेपालका उत्तरी क्षेत्रका आदिवासी जनसमुदायहरु र चिनिया तिब्बती एवं चीनिया भाषा तथा सांस्कृतिक पर्वहरुसंग तात्वीक र ऐतिहासिक सम्बन्ध छ ।

त्यसकारण विश्वभर प्रचलनमा रहेको तत्वीय खगोलशास्त्रमा आधारित 'चन्द्र नयाँवर्ष' अर्थात् 'चन्द्रमास'को आधारमा वर्ष वा सम्वत् वा ऋतु परिवर्तन हुने यो 'ल्हो' परम्परा पश्चिमी 'ग्रेगोरियन' र भारतीय 'कालचक्र' तथा सूर्यदय तन्त्रमा आधारित पात्रो वा सौर्य पात्रोसंग पनि सम्बन्ध रहेको हुन्छ । साल, सम्वत्, सम्वत्सर, वर्ष, महिना, दिन, रात फेरिने कुरो आधुनिक वैज्ञानिक भाषामा भन्नु पर्दा खगोल र ज्योतिष विज्ञानसंग गाँसिएको हुन्छ । त्यसैले तत्वीय खगोलशास्त्रमा आधारित चन्द्र वर्षको प्रतिनिधित्व गर्ने तत्वीय वर्षचक्रको एउटा वर्षबाट अर्को वर्ष (१२ जीवहरुको ल्हो वा लो चक्र) फेरिने परम्पराको आफ्नै छुट्टै मुल्य, मान्यता, ईतिहास रहि आएको

छ। चीनमा यो तत्वीय चन्द्र नयाँवर्ष र ऋतु परिवर्तन् (सुर्य दक्षिणबाट उत्तरी ध्रुवतर्फ लाग्ने Winter Solstice age प्रवेस भएको सूचकको रुपमा मनाउने) Spring Festival उत्सव नै हो।

यस तथ्यले यो तत्वीय खगोल तथा ज्योतिपशास्त्रमा आधारित सम्वत् प्रणालीले नेपाल तथा विश्व भर रहेको प्राचीन तत्वीय खगोलशास्त्र तथा ज्योतिपशास्त्रलाई अपनाउने बिश्व समुदाय सँगको ऐतिहासिक र प्राचीन सम्बन्ध तथा मानव सभ्यताको एउटा वैज्ञानिक विकासको पक्षसँग समेत सम्बन्ध स्थापित गर्ने ढोका खोलेको छ।



अध्याय पाँच

# तत्वीय सम्वत ल्होकोर अनुसार फेरीने ल्होछार/लोसार माघ र फागुन महिनामा पर्छ किन ?

ल्होछार या लोसार उत्पत्ति, उदम् तथा ज्युङचीलाई आधार मानेर मानिने साझा उत्सव हो । यो उत्सव चन्द्रपात्रोको पहिलो महिनाको, पहिलो दिन ल्हो(वर्ष) फेरिने दिनको रूपमा अन्तर्राष्ट्रिय स्तरमा नै मनाइन्छ । सिद्धान्तका दृष्टिले यो वर्ष, महीना, दिन, समय आदि जनाउन प्रयोग हुने तत्व १२ जीव जन्तुको ल्होकोर (वर्ष चक्र), यीङ र याङ युक्त पाँच खाम(तत्व), अष्टकोणीय पाखं (चिनियाँमा क्वा) र एक देखि नौ अङ्कीय वर्गाकार मेवागु (चिनियाँ ल्हो शू) मा आधारित खगोल तथा ज्योतिषशास्त्र हो ।

पहिलो त चिनियाहरुले मनाउने परम्परागत चिनिया चन्द्र नयाँवर्ष उत्सव अर्थात् स्प्रीङ फेस्टीभल संग नेपालमा तामाङ समुदायले मनाउने ल्होछार, योल्मो समुदायले मनाउने लोसार तथा मुस्ताङी, डोल्पालीहरुले मनाउने रुङ पर्व एकै समयमा पर्दछ ।

नेपालमा मुस्ताङी, डोल्पाली, मुगालीको रुङ र तामाङ, योल्मोपाको सोनाम ल्होछार(लोसार) तथा चीनीया परम्परागत तत्वीय गणना तथा खगोलसास्त्रका आधारमा मनाउने स्प्रीङफेस्टीभल, सिननीयन पर्व या चीनिया चन्द्र नयाँवर्ष उत्सव यसपाली माघसुक्ल पक्ष प्रतिपदा परेवाका दिन तदनुसार सन २००९ को जनवरी २६-२७ मा परेको छ भने तिब्बतीहरू तथा नेपालमा सेर्पा समुदायले मनाउने यही पर्व फेब्रुअरी २५ मा परेको छ । यसैगरी चिनको तिब्बतमा यही लोसारले तिब्बती राजाको सम्वत् 'बोओीबयालो' (यस पाली २१३६ सौं) फेरिने दिनको रूपमा पनि बुझाउँछ र यसलाई ग्याल्बो (राजाको) लोसार भनेर भन्ने गरेको पाइन्छ । नेपालमा गुरूङजातिले भने २०४९ साल पछि यहि उत्सव सूर्य पात्रोको सौरमास पौषादी १५ गतेका दिनलाई तमु-ल्होछार मानिआएको छ ।

यसपाली पनि लाङ(गोरु) ल्होकोरको वर्ष एउटै तत्व भए तापनि गुरुङ, तामाङ, सेर्पा या चिनियाँ तिब्बती भनेर किन भिन्न समयमा यो पर्व मनाउँछन त ? जिज्ञासा जाग्नु स्वभाविक नै हो । गहन अध्ययन गरेमा स्पष्ट बुझ्न सकिन्छ । यसो हुनुमा प्रचलित पात्रो परम्पराको वर्ष सूर्य दिन ३६५ दिनको एक वर्ष मान्ने र चन्द्रवर्षको ३५४ चन्द्रदिनको एक चन्द्रवर्ष मान्ने र ३६० चन्द्रदिनको एक चन्द्रवर्ष मान्ने परम्पराले गर्दा पात्रोमा ठूलो भूमिका खेलेको हुन्छ ।

तिव्वतमा सन १०२७ तदनुसार अग्नी खरायो वर्ष पछि व्यवहारमा आएको भारतीय कालचक्र तन्त्रमा आधारित तिव्वती कार्ची अनुसार तीव्वती पात्रोमा ३६० दिनको एक चन्द्रवर्ष मानिन्छ (मान ची खाङ १३:१९९५) । चिनियाँ, नेपालमा तामाङ, योल्मोपा समुदाय तथा प्रचलित भारतीय र पाश्चात्य ग्रेगोरियन पात्रो परम्परामा ३५४ चन्द्र दिनको एक चन्द्र वर्ष मानिन्छ । यही भिन्नताले तिव्वती चन्द्र पात्रोको तीथीमा पनि औंसी र पूर्णीमा बाहेक अरु दिनमा पर्ने पर्वहरुमा भिन्नता आएको हो ।

एक चन्द्रमासमा साधारणतया २९.५ दिनको एक महिना हुन्छ यसरी गणना गर्दा चन्द्रपात्रोमा १२ महिनामा हुने एक वर्षमा ३५४ दिनमात्र पुग्छ । तर चिनिया तिव्वती एक चन्द्रमास ३० दिन हुन्छ जसले गर्दा १२ महिनामा ३६० दिनको एक वर्ष मानिएको हुन्छ । यसले गर्दा सौरमास बमोजिमको ३६५ दिनको एक वर्ष पुग्न ६ दिन अपुग हुन्छ भने अन्य पात्रोमा ३६५ पुग्न ११ दिन अपुग हुन्छ ।

तसर्थ उपरोक्त अपुग दिनहरुको योगफलबाट महिना पुगेको वर्षमा चन्द्र अधिकमास वर्ष (Lunar Leap Year) जोडिन्छ । नेपाल, भारत तथा चिनियाहरुको अधिकमास जोड्दा ११ दिन x २.७ वर्ष = २९.७ दिनको सरदरले अधिकमास एक पटक जोडिन्छ । यसरी 'अधिकमास' जोडिएर हुने वर्षलाई चन्द्र अधिकमास वर्ष (Lunar Leap Year) मलमास परेको वर्ष भनेर भन्ने गरिन्छ ।

तिव्वती पात्रोमा चन्द्र अधिकमास वर्षको निम्ति २.७ वर्षमा एक पटक जोडिँदा पनि (५ दिन x २.७ वर्ष (सरदर) १५) एक अधिकमास पुग्दैन जसले गर्दा उसको पात्रोमा अधिकमास एक अर्को वर्ष मात्रै जोडिन्छ । चन्द्र अधिकमास वर्ष प्रत्येक अढाइ या तीन वर्षमा जोडिँदा भारतीय पात्रोमा २९.७ दिनको अधिकमास पुग्न जान्छ तर तिव्वती चन्द्र पात्रोमा एक अधिकमास महीना ४ वर्षमा पनि २० दिनको मात्र हुन जान्छ । किन भने तिव्वतीहरुको ३६० दिनको एक वर्षमा प्रत्येक वर्ष अपुग ५ दिनले तीन वर्षमा मात्र १५ दिन हुन पुग्छ त्यसकारण तिव्वती चन्द्र अधिकमास (मलमास) वर्ष भारतीय या अन्य पात्रोमा भन्दा एक वर्ष पछाडी पुग्न जान्छ ।

यसो हुँदा नेपाल, भारत, चीनको पात्रोमा चन्द्र अधिकमास वर्ष जोडीएको मलमास वर्षमा चन्द्रमास १३ महिना हुन्छ । त्यो वर्ष तिव्वती चन्द्रपात्रोमा अधिकमास नजोडिएको कारण त्यो वर्ष तिव्वती पात्रोमा अधिकमास वर्ष जोडिँदैन र मलमास मानिदैन अनि तिव्वती त्यो वर्षको चन्द्रपात्रोमा चन्द्रमास १२ महिना कै मात्र हुन्छ । यस्तो भएको वर्ष टुंगिंदा चिनियाँ तिव्वती परम्परा बाहेकको चन्द्र पात्रोमा (तामाङ ह्योल्मो तथा चीनियाहरुको) १३ औं महीना सकेर प्रथम चन्द्र महीनाको प्रथम दिन नयाँवर्ष (ल्होछार/लोसार) आरम्भ

हुँदा चिनिया तिब्वती चन्द्रपात्रोको १२ औं महिना समाप्त भइ प्रथम चन्द्र महीनाको प्रथम दिन ल्होछार या लोसार एकै दिनमा पर्दछ र त्यो बर्ष नेपालमा सोनाम या ग्याल्वो ल्होछार या लोसार भनेर अलग्गै मानिदै आएका दुवै ल्होछार वा लोसार एकै दिनमा पर्न जान्छ।

फेरी अर्को वर्ष भने चिनियाँ तिब्वती पात्रोमा अधिकमास जोडीनाले तिब्वती चन्द्रपात्रोमा १३ चन्द्रमहीनाको एक बर्ष हुन्छ। तिब्वती बाहेकका चिनिया, भारतीय, नेपालदेशीय पात्रोमा १२ चन्द्र महीनाकै एक बर्ष हुन्छ। त्यसकारण त्यो बर्ष तिब्वती चन्द्रपात्रोको १३ औं महिना समाप्त भइ प्रथम चन्द्र महिनाको प्रथम दिन अर्थात् चिनियाँ तिब्वती ग्याल्वो लोसार आरम्भ हुन्छ भने अन्य पात्रोमा त्यही ल्होछार (लोसार) या तत्वीय चन्द्र नयाँ बर्षारम्भ तिब्वती पात्रोको बाह्रौं चन्द्रमहीनाको प्रथम दिनमा नै प्रथम चन्द्रमासको प्रथम दिन अर्थात् तत्वीय चन्द्र नयाँवर्ष आरम्भ हुन्छ। त्यसैले चिनिया तिब्वती लोसार भन्दा एक महिना अगाडी नै नेपालमा तामाङ, योल्मोपा, मुस्ताङी, डोल्पाली तथा चीनका चिनियाँहरुको परम्परागत तत्वीय चन्द्र नयाँवर्ष उत्सव पर्दछ।

यही कारणले गर्दा प्रत्येक २.७० वर्षमा एक पटक चिनियाँ तिब्वती ग्याल्वो लोसार र नेपालमा तामाङ, ह्योल्मो, मुस्ताङी, डोल्पाली समुदायको सोनाम भनिएका ल्होछार, लोसार, रुङ पर्व तथा चिनीयाँ नयाँवर्ष र बसन्त उत्सव एकै दिनमा एउटै तिथीमा अर्थात् नेपाली पात्रो अनुसार माघसुक्लपक्ष प्रतिपदा परेवाको दिनमा पर्दछ भने बाँकी बर्षहरूमा ग्याल्वो भनिएका लोसार फाल्गुन सुक्लपक्ष परेवाका दिन पर्दछ। यो भिन्नताको मुख्य कारण यही पात्रोको भिन्नताले भएको हो।

यस्तो भिन्नताले लोसार पर्व मात्र होइन चिनियाँ तिब्वती पात्रोमा सागादावा अर्थात् वैशाख पूर्णिमा (बुद्ध जयन्ती) पनि जेठ पूर्णिमाका दिन पर्दछ। यहाँ तिब्वती भाषामा सागादावा भन्नाले बुद्ध पूर्णिमा युक्त महिना (राधा, बिशाखा) हो (शरदचन्द्र दास, तिब्वती अंग्रजी शब्दकोस: १२६२-१२६३:२००५)। **सागा** शब्द **विशाखा** नक्षेत्रकै आधारबाट निर्माण भएको महीनाको नाम हो अर्थात वैशाख महिना हो तर चिनियाँ तिब्वती पात्रोको त्यो दिन नेपालदेशीय तथा भारतीय पात्रो अनुसार जेठ महिनामा पर्दछ। तसर्थ माथि उल्लेखित अधिकमास जोडने प्रथा या ३६० दिनको चन्द्रबर्ष गणनाको तिब्वती भिन्नताको कारण उनीहरु सागादावा महीना बिशाखा, वैशाख महिना कै पूर्णिमा भएपनि भारतीय पात्रोको जेठपूर्णीमा पुगेको हो। तापनि तिब्वती पात्रोको मास नामाकरणको मूल आधारले चाँहि वैशाख पूर्णिमा नै भन्ने बुझाउँछ।

त्यसैले तिब्वती लोसार पर्व या सागादावा (बुद्ध पूर्णिमा) सबै बौद्ध समुदायले एउटै दिनमा मनाइने पर्व हुँदा हुँदै पनि तिब्वती चन्द्रपात्रोको ३६० दिनको वर्ष मान्ने पद्दतिका कारण अधिकमास गणना तथा पात्रोमा जाडिने फरक परम्पराको कारण फरक दिनमा अर्थात् एक महीना पछि पर्न गएको हो । उदाहरणका लागि इस्वी सन २००९ र २०10 तिब्वती तथा भारतीय र अन्य चन्द्रपात्रोलाई तुलना गरेर हेरेमा यस्तै भएको पाइन्छ ।

नेपालमा सोनाम भनिने तामाङ, ह्योल्मो समुदायले मनाउने ल्होछार (लोसार), मुस्ताङी, मुगाली, डोल्पालीको रुङ तथा चीनीयाहरुले मनाउने नयाँवर्ष स्प्रीङफेस्टीभल र चिनिया तिब्वतीहरुले मनाउने गरेको ग्याल्बो लोसार एकैदिनमा सन २०१० फेब्रुअरी महीनाको १४ तारिख आइतबार परेको थियो । त्यो वर्ष तिब्वती चन्द्र पात्रोमा अधिकमास वर्ष परेको थियो । यसले गर्दा सन २०११ र २०१२ मा तिब्वती लोसार नेपालका तामाङ, योल्मोपाको भन्दा एक महिना पछि परेको छ । अब सन २०१३ मा फेरी सबै समुदायको ल्होछार वा लोसार एकैदिनमा पर्नेछ । किन भने सन २०१२ मा नेपालको चन्द्रपात्रोमा अधिकमास जोडिएको छ भने तिब्वती पात्रोमा अधिकमास जोडिएको छैन तिब्वती पात्रोमा सन २०१३ मात्र अधिकमास जोडिने छ फेरी यो वर्ष तिब्वतीहरुको लोसार तामाङ, योल्मोपा लगायतको भन्दा फेरी एक महिना पछाडी धकेलिन्छ ।

त्यसकारण उदगम् तथा उत्पत्तिका ऐतिहासिक आधार र आधारभूत तत्वीय खागोलशास्त्र तथा तत्वीय ज्योतिषशास्त्रीय सिद्धान्तका आधारमा सोनाम भनिएका र ग्याल्बु भनिने ल्होछार या लोसार एउटै हो । चन्द्रपात्रो परम्परामा तिब्वतीहरुको चन्द्र बर्षमा ३६० दिनको र अन्य चन्द्रपात्रोमा ३५४ दिनको एक चन्द्रवर्षलाई आधार मानेर गरिने पात्रो निर्धारण गर्दाको प्राविधिक भिन्नताको कारणले मात्र फरक पर्न गएको हो । यहीकारण अधिकमास बर्षमा नेपालमै चिनिया दुतावास तथा चीनका बारेमा चासो राख्नेहरुले चिनिया परम्परागत नयाँवर्ष अर्थात् स्प्रीङफेस्टीभल उत्सव र चिनिया तिब्वती नयाँवर्ष उत्सव समारोह एक महिनाको अन्तरमा एक वर्षमा दुइ पटक अघि र पछि आयोजना गर्ने गरिएको पाइन्छ ।

यो उत्सव मनाउने विधि विधान स्थान बिशेष अनुसार अलि-अलि फरक परे पनि सार र मूल सिद्धान्त सबैको एउटै हो । त्यसैले पनि चाहे नेपालका उच्च पहाडी हीमालय भूक्षेत्रमा बसोबास गर्ने नेपाली तामाङ, योल्माली, डोल्पाली, मुस्ताङी लगायत लामा भोटे समुदायको होस अथवा चिनिया तिब्वती, चिनिया, जापानी, कोरियाली, भियतनामी, मलायी, सिंगापुरी आदि मुलका जनसमुदायको ऐतिहासिक एवं साझा सास्कृतिक पर्ब अथवा चन्द्र नयाँ वर्ष उत्सव एकै हो ।

## अध्याय छ
# तत्वीय वर्ष/साल/सम्बत् फेरिने उत्सव ल्होछार वा लोसार परम्परा

### ६.१ ल्होछार/लोसार उत्सव

"ल्होछार पर्व" अन्तर्राष्ट्रिय रुपमा "माघ शुक्लपक्ष प्रतिपदा" ।चन्द्रमाघ महिना। को पहिलो दिन परेपनि मनाउने तरिका देशै पिच्छे र समुदायको सांस्कृतिक परम्परा अनुसार केहि भिन्न रहेपनि आधारभूत रुपमा मनाउने विधिमा पनि एक रुपता नै पाइन्छ।

यस्तो भिन्नता भूगोल, बस्तु-उत्पादन र उपलब्धता, त्यो देशको बजारव्यवस्था र अर्थतन्त्र तथा संस्कृतिक नीतिका कारणले पनि भएका छन् । तापनि "ल्होछार" मान्ने पद्धतिलाई समग्रमा तीन भागमा बाँडेर अध्ययन गर्न सकिन्छ ।

यो सांस्कृतिक चाड ल्होछारलाई मनाउने तरीका हुन् पूर्व तयारी (Preparation), ल्होछारको पूर्वसन्ध्या (Lhochhar Eve) र ल्होछारको दिन (First day of Lhochhar) हुन्छ । नेपालको तामाङ समुदायले मनाउने उत्सवमा आधारित भएर यहाँ प्रस्तुत गरिएको छ ।

### ६.२ पहिलो तयारी (Preparation)

सामान्यतया ल्होछार उत्सव आउनुभन्दा एक महिना अगावै "ल्होछार" उत्सवको तयारीको कार्य शुरु हुन्छ। नयाँ वर्ष लाग्नुभन्दा पहिले "नसकिएका" अधुरा तान बुन्ने लगायतका कामहरु सम्पन्न गर्ने, अप्रीय घटनाहरु नहोउन र नदोहोरिउन् भनी कर्मकाण्ड गर्ने तथा नयाँ बर्षलाई स्वागत गर्ने तयारी गर्दछन् । सामूहिक रुपमा गाउँ टोल, बाटोघाटो, आँगन, चौतारा, पानी पधेंरो, गोठ आदि मर्मत, सफासुग्घर र लिपपोत गर्दछन् । टाढा बिदेशिएका आफन्तजनहरुलाई खबर पठाउने, खानापिनाका लागि आवश्यक सामाग्रीहरु सामल, अन्नपात आलु, भ्याकुर, तरुल आदि फलफूलहरु, कन्दमूल र पूजाका सामग्रीहरु तयार गर्दछन् । अन्तिम दिनमा, हरेक परिवारले ल्होछारको दिन

कुलदेवताको थान वा देवीदेवताको थानमा आगामी वर्ष राम्रो खेती बालिनाली होस् भनी प्रार्थना गर्नका लागि बीउबीजन पानीमा भिजाई टुसा आउने पार्दछन् ।

### ६.२.१ ल्होछार पूर्व सन्ध्या (Lhochhar Eve)

पुरानो वर्षको १२ औं महिनाको अन्तिम दिन राती ११:३० बजे मानिसहरु बत्ति बाल्नु तथा खराब वा मार वा अकुशल प्रेतात्मा वा अपसकुन हटाउनुका लागि सबै भेला भएर १२ वटा तत्वीय वर्षहरुको ल्होकोर बनाई मनसाउने गर्दछन् । लामाहरुले मारमाथि सत्यको विजय देखाउने खालका मकुण्डो नाच देखाउने गर्दछन् । विभिन्न खालका नाचगानको माध्यमबाट विगत वर्षभरि भए गरेका नराम्रा कार्य तथा गल्ती, भूलहरुको प्रायश्चित गर्ने र आगामी वर्षमा विगतका सबै नराम्राहरुलाई बिर्सेर राम्रो हुने कामना गर्दै हरेक व्यक्तिले ल्होछारको पूर्वसन्ध्यालाई पुरानो वर्षबाट बाधा बिरोध दिने, चिताएको कुरा पूरा हुन नदिने, रोगव्याधी आदि खराब वा मारलाई दमन गर्ने र खराब कर्म मारबाट नयाँवर्षलाई मुक्त गर्ने अवसरका रुपमा हेर्दछन् । सामान्यतया: ल्होछारको पूर्व सन्ध्यामा निम्न कार्यहरु गर्दछन् ।

(क) आ-आफ्नो थर, कुल र वंशको परम्पराअनुसार कुलपूजा गर्ने र परिवारमा सुखशान्ति, समृद्धि र स्वास्थ्य लाभको लागि पितृहरुबाट आशिर्वाद तथा शक्ति माग्ने ।

(ख) फिर्ने ल्होको मानिस भएमा उसको ग्रह चल्छ भन्ने मानिन्छ । त्यसैले ल्हो खोर्लो बनाएर ग्रहदशा फाल्ने ।

(ग) आगामी वर्षमा अन्नबाली राम्रो होस् भनी डालोमा बीउबिजन राख्ने तथा टुसा आएको बीउबिजन राखी पूजा पाठ गर्ने ।

(घ) परिवारका सबै सदस्यहरु भेलाभई भोज खाने, आतासबाजी गर्ने, मनोरञ्जनात्मक नाचगान तथा रमाइलो ठट्टा गरी नयाँ वर्षको प्रारम्भ नभएसम्म बस्ने ।

(ङ) अँध्यारोलाई उज्यालोले हटाए जस्तै परिवारमा सँधै उज्यालो र खुशियाली आओस् भनी बेलुका बालेका बत्ति रातभर बाली राख्ने वा आकाश बत्ति बनाएर घर–आँगनमा रातभर बालि राख्ने ।

(च) राती ११ बजेको समयमा विगत वर्षभरिको नराम्राकामहरुको प्रतिक ल्होकोर च्युङनी वनाएर मन्साउने । आगनमा आगो बालेर रमाइलो गर्ने र नयाँ वर्षको स्वागतमा बत्ति बालेर घरका झ्याल ढोकाहरु सबै खुला राख्ने गरिन्छ ।

(छ) गुथुग्पा अर्थात् नौ थोक मिलाएर बनाएको खानालाई गुथुग्पा (कुथोक) भनिन्छ । गुथुग्पासँगै भाग्य चिन्ने शुभ चिन्ह वा प्राणीहरुको संकेतहरु राखेको मिष्ठान्न वा खाद्यान्न राख्ने चलन चिनियाहरुमा पनि पाइन्छ ।

## ६.२.२ ल्होछारको दिन (Lhochhar's Day)

ल्होछारको दिन ह्रीसोल, डोनसोल, गेखोर आयोजना गरी हर्षो उल्लासपूर्वक ल्होछार अर्थात ऋतु परिवर्तनको उत्सव 'छार दीङ' बसन्त पर्व (Spring Festival) मनाउने गरिन्छ । ल्होछारको दिन मूलत: निम्न कार्यहरु सम्पन्न गरिन्छ ।

### (क) छो प्रसाद चढाउने

ल्होछारको दिन घरमुली, घरको जेठोबाठो वा घरको अन्य कुनै सदस्यले सबेरै नुहाएर सफा भइ आफ्नो घरमा भएको लाखाङ वा छ्योंथ्रीखाङ 'देवस्थल' र सो नभएमा भगवान गौतम बुद्धको कु वा तस्वीर राखी चोखो पानी, साङ छेमार वा फेमार दुची (दुईछ्यु) तथा छो (फलफूल, कन्दमुल-आलु/भ्याकुर/तरुल, खाप्से गेङ, बावर गेङ, आदि) पकवानहरु राखी साङसेरग्याम गर्ने ।

भगवान तथा पूर्खाहरुप्रति धन्यवाद ज्ञापन गर्ने र पर्याप्त खान, लाउन, वस्न तथा धनधान्य, समृद्ध परिवारको लागि आशिर्वाद माग्ने । पूजामा चढाएको "छो", दुइथी, फेमर आदिले पाहुनाहरुलाई नयाँ वर्षको सगुन तथा प्रसादबाट स्वागत गर्ने ।

### (ख) दर्जु ठड्याउने

नयाँ ल्हो को आगमन (ल्होछार) ले समस्त प्राणी जगतकै रक्षा एवं कल्याण गरुन् भनी मंगलमय कामना स्वरुप ल्होछारमा घर आँगन तथा

गाउँ वरिपरिका डाँडाहरु, गुम्बा, मठ-मन्दिरहरुमा लुङदर/दार्ज्यु गाड्ने र फहराउने । लामालाई आफ्नो ल्हो अनुसार ची (पात्रो) मा साइत हेराई भनेअनुसारको दर्जु राख्न सकिन्छ । लामा नभएमा पाँचै रङ्गको दर्जु राखे हुन्छ । त्यसो पनि नभेटेमा आकाशे रंगको दर्जु राख्नु राम्रो हुन्छ । उक्त दिन दर्जु नराखेमा वसन्त पञ्चमीको दिन बिहान सवेरै दर्जु उठाउनु राम्रो हुन्छ । दर्जुसँगै धूपवत्ति बाल्ने र केम (स्यालगार) चढाउने गरिन्छ । पहिलो दिन दर्जु राख्नु नभ्याएकोहरुले पञ्चमीको दिन राख्ने गरिन्छ ।

### (ग) आशिर्वाद तथा शुभकामना दिने-लिने

पूजाआजा सकेपछि सुख, शान्ति, निरोगिता र दीर्घायूको लागि सबै सदस्यहरुलाई परिवारको ज्येष्ठ व्यक्तिबाट नौनीधिउ तथा कोकोम्हेन्दोको टीका तथा खाता आशिर्वाद स्वरुप दिने र सानो साइनोकोले आफूभन्दा ठूलालाई पनि ढोग, खादा चढाई वा उपहार दिई सुख शान्तिको कामना गर्ने ।

भोजभत्तेर खाने । साथीसंगीहरुसँग मिलेर केम लिने, रमाइलो गर्ने तथा तीर खेल्न जाने । साथै, आफूले मान्नु पर्ने व्यक्तिहरुका आशिर्वाद लिनुजाने र आफूकहाँ आउने पाहुनाहरुलाई पनि स्वागत गर्ने । माघे संक्रान्तिमा गरिआएको सबै काम यस दिन गर्ने । पहिलो दिन वा पञ्चमी भित्रमा ल्होछारको उपलक्ष्यमा सामूहिक समारोह गर्ने र सो समारोहमा संयुक्त रुपमा धर्जु उठाई सबैले "ल्ह ग्यल्लो दुद् फाम्मो" (देवताको जीत मारको हार) भनी खुशीयाली स्वरुप चम्बा आकाशमा उडाई हर्ष बढाइ गर्ने र त्यसपछि शुभकामना आदान प्रदान गर्ने ।

### ६.२.३ ल्होछार पश्चात् (Post Lhochhar)

ल्होछार उत्सवलाई हर्षोल्लासपूर्वक मनाउँदै खास गरी १५ दिन पछि अर्थात् पूर्णिमा पछि लो प्रीवा थुम्बा सम्पन्न गरिन्छ । यो दिन चिनियाँहरुको युआन स्याउ जे 'लालटीन चाड' जस्तै नै हो । मान्यजन, नातागोता, कुल कुटुम्बा, इष्टमित्र लगायत सबै साथीसंगीहरुलाई भेटघाट गरी खादा सहित शुभकामना आशीर्वाद आदन–प्रदानका साथै आफ्नो गच्छे अनुसार कोसेलीहरु आदान प्रदान गर्ने, आलोपालो गरी इष्ट मित्र कहाँ जाने, चेलिबेटी बोलाउने

र खानपिन गर्ने । खानपीन आदान–प्रदान गर्ने । यो क्रम प्रतिपदादेखि पञ्चमी अर्थात् बसन्त पञ्चमीसम्म पनि मनाउन सकिन्छ ।

बसन्त पञ्चमीमा साना बाबुनानीहरुलाई पठन-पाठन गराएमा छिटो सिक्ने भन्ने विश्वास भएकाले शिक्षा आरम्भ गराउने । आउँदो वर्षभरीको अन्नबाली राम्रो र सफल होस् भनी भूमीपूजा, मंगलपूजा, प्रीतिभोज, वनभोज तथा साँस्कृतिक कार्यक्रम आदिको आयोजना गरी मैत्री एवं भावनात्मक रुपमा हर्षोल्लासपूर्ण वातावरणमा ल्होछारपर्वको समापन समारोह आयोजना गरिन्छ ।

### ६.२.४ ल्होछार विशेष खाद्य परिकारहरु

(क) दुची (दुईचे) बनाउदा चाहिने बस्तुहरु

१. डारसुम (गुलियो तीन) चिनी, सखर, मह, २.कारसुम (सेतोतीन) दुध, दही, नौनीघिउ ३. सेरसाङ (पवित्र रत्न) फलाम, तामा, सुन र चाँदी पखालेको पानी । यी तिन चिज मिसाई बनाएको तरललाई दुची (दुईचे) भनिन्छ ।

(ख) छेमार (फेम्बेर) माथि बनिएको दुईचे (दुची) आधा भागचाहीँ दुईचे (दुचीकै रुपमा प्रयोग गर्न राख्ने र आधा दुईचे (दुची)मा चम्पाको पिठो जौ, अुवा, करु, मकै, गहुं, चामल, कुनै एकको सातुमा मिलाई बनाएको खाद्य पदार्थलाई छेमार (फेम्बार) भनिन्छ ।

(ग) खाप्से गेङ : गहुं, जौ, चामल वा त्यस्तै अन्नको पीठोलाई चिनी र घिउसँग मोली मुछिएको पीठोलाई बिभिन्न आकृतिमा काटेर घिउमा पकाएको परिकारहरु ।

(घ) बाल्डु : सकेसम्म तीते फापर तथा मिठे फापर वा सेतो कोदोको पीठोबाट बनाएर पानीमा पकाएका बिभिन्न आकृतिका परिकारहरु

(ङ) आलुम : गहुं वा कोदोको पानी रोटी ।

(च) बावर : कुल पूजा चढाउँदा गर्ने सादा बावरहरु ।

(छ) कन्दमूल : सबै प्रकारका तरुल, भ्याकुरहरु र बिशेष बनतरुल ।

(ज) फलफुल: मोजे,

(झ) स्या, तार्डा: स्याफोल्दोङ, खाङवा स्या, ब्लोवा स्या, मोल्वास्या, ह्योवास्या

(ञ) 'Firir: मिठे फापरको तेलमा पकाएको रोटी

(ट) फोल्दोङ कान, म्लाकान: चामलको भात काँसको बट्को आकारमा सजाइएको विशेष खाना

(ठ) गुथुग्पा: नौ प्रकारका विभिन्न चिजबिजहरु पिठोमा पोको पारेर पकाएको परिकार जो सामूहिक रुपमा बसेर बाँडेर खाइन्छ र जस्लाई जे परेको छ त्यसको आधारमा भाग्योदय निर्धारण गरेर लोछार आरम्भ साँझमा खेलको रुपमा खेलिन्छ ।



# अध्याय सात
# ल्होछार संस्कृति संरक्षणका लागि सुझाव

### ७. सुझावहरु

ल्हो/लो तत्वीय सम्वतको प्रयोग नेपालमा प्राचिनकाल देखिने आजसम्म निरन्तर प्रयोग हुँदै आइरहेकोले यसको संरक्षण, संबर्धन तथा विकास गर्नका लागि अति आवश्यक भइ सकेको छ। यो परम्परा लगभग लोप हुने स्थितीमा रहेकाले यसबारे अध्ययन, अध्यापन तथा संरक्षणका निमित्त यहाँ हेहि सुझावहरु प्रस्तुत गरेको छु।

१. तत्वीय सम्वत् एक विश्वमा अस्तीत्वमा रहेको मौलिक सम्वत् र नेपालमा सरकारले नै मान्यता प्रदान गरेर यस सम्वत् अनुसारका नयाँवर्षका दिन सरकारी बिदा समेत दिएको अवस्था भएकाले नेपालमा तत्वीय सम्वतको प्रयोग भाषाको लेख्यस्वरुप लिपिको विकास हुनुपूर्व नै प्रयोग भइ आइ रहेको छ। तसर्थ ल्हो/लो अर्थात् तत्वीय वर्ष वा सम्वत् को आधारभूत मान्यता समेत एउटै भएकाले सम्वन्धित विज्ञहरुको संग्लनतामा 'किरात यले सम्वत अध्ययन समिति' जस्तै गठन गरेर यसका गहन अध्ययन गर्न गराउन नितान्त आवश्यक भइसकेको छ।

२. राणाकालसम्म पनि तिब्वत सँगको सन्धिहरुमा यो तत्वीय सम्वत्को प्रयोग भइरहेकोमा फेरी गणतन्त्र नेपाल मुलुकको सरकारको मुख्य दस्तावेजहरु तथा आधिकारीक कामकाजी लखोटहरुमा यो तत्वीय सम्वतको पनि प्रयोग गरीनु पर्दछ।

३. यो सम्वत् विश्वस्तरमा र नेपालको प्राचीन सम्वत् प्रणाली भएकाले शैक्षिक सामाग्रीहरुमा समेत तत्वीय खगोल शास्त्र तथा ज्योतिष शास्त्रका आधारभूत सूचनाहरु समावेस गराउनुपर्दछ।

४. यो तत्वीय खगोलशास्त्र एसिया सबै मुलुकहरुमा कुनै न कुनै रुपमा जनसमुदायमा चलनचल्तिमा रहेको हुनाले तत्वीय सम्वत् ल्होकोर प्रणाली बारे बृहत्तर राष्ट्रिय तथा अन्तराष्ट्रिय स्तरको छलफल गोष्ठी तथा सभा सम्मेलनहरुको आयोजना गरी संरक्षण तथा संबर्द्धन गर्ने सके प्राचीन यो खगोलीय अध्ययन प्रणालीलाई पुर्खाको ज्ञान अर्थात् प्राचीन आदिबासीय ज्ञानका रुपमा जिवन्त राख्न सकिने छ।

## १. परस्पर सुयोग्य सम्बन्ध चक्र 'ल्होकोर'

रेखाचित्र-३




## २. खाम ज्युङ्वा ङा तत्वको सृजनात्मक चक्र

रेखाचित्र-४



३. खाम ज्युङ्बा ङ्ग तत्वको ध्वंसात्मक चक्र

रेखाचित्र-५




४. खाम ज्युङ्बा ङ्ग तत्वको बेमेल चक्र

रेखाचित्र-६



## ५. अतित पार्ख (क्वा) अष्टभुज

रेखाचित्र-७




## ६. ज्युङचीखोर (तत्वीय पात्रो)

रेखाचित्र-८



## ७. ल्होछार उत्सवमा तामाङ समुदाय

चित्र-५





# १. तत्वीय सम्वत्संज्ञा अभिलेख-चित्र, फाबा-सीङगुन 'स्वयम्भू', काठमाडौं

चित्र-६



ल्होकोर च्युङनीको १२ औं बदेल तत्वीय वर्ष

२. तत्वीय सम्वत्संज्ञा अभिलेख-चित्र फावा-सीङगुन 'स्वयम्भू' चित्र-७



३. तत्वीय सम्वत्संज्ञा ज्यारोङ्खास्योर 'बौद्धस्तुपा' चित्र-८

# मुख्य मुख्य सन्दर्भ ग्रन्थहरू:


Bal, P. (1996). Lhochhar Parampara. Kathmandu: Sangrila Prakashan.

CARUS, P. (1989). Chinese Astrology. Bombay: D.B. Taraporevala Sons & Co. Private Limited.

Chiring, S. N. (1999). Budham Saranam Gachhami, Tibbati Panchang. Darjeeling: Darpan Publication.

Das, S. C. (2005). A Tibetan English Dictionary. Delhi: Motilal Banarasi Das Pvt Ltd Delhi.

G.D. L. (1983). Tamang Chyungnila Thimten TamChyoi. Gangtok ShyarDenzong, Sikkim: G.D.Lama.

Gurung, D. J. (1996). Tamu Gurung Nepali English Dictionary. Kathmandu.

Gurung, J. (2007). A study on Sino Tibetan Astrological System among the Gurung of Gandaki region in Western Nepal. Contributions to Nepalese Stidies, 34.

Gurung, J. (1993). Lhochharko Subhakamana Bandar Varsako lho Phal. Kathamandu.

Jing, Y. (2007). A Taste of China Chinese Zodiac Stories. Bejing: China Pictorial House.

Lama, M. (2006). Bahra lho Pancha Kham ra Lhosar. Kathmandu: Mukesh Lama.

Losang, T. (1986). Modern Tibetan Languages II. Delhi, India: Library of Tibetan Works and Archives.

M.Grimm, C. (2003). Powerfull Feng Shui Balancing Tools. Kathmandu: Pilgrims Publishing.

Moktan, B. (1956). Jikten Tamchyoi. Darjeeling: Budhhiman Moktan.

Pakhrin, S. L. (1997). Tamba Kaiten Whai Rimthim. Kathamdu: Ratnapustak Bhandar.

Penjore, T. (2002). A Guide to Horoscope. Thimpu: M/S Deki Paljor Enterprises.

Rahul, Sankrityayan. (2003).Tibet me Baudha Dharma llahabada, Kitab Mahal.

Risley, H. (1995). The Gazetteer of Sikkim. Delhi: Low Price Publications.

Snellgrove, D. L. (1992). FOUR LAMAS OF DOLPO. Kathmandu: Himalyan Book Seller.

Tai, S. (2001). Chinese Astrology. Delhi: Sterling Publishers Pvt. Ltd.

Tamang, A. (2006). A Brief History of Lhochhar. Kathmandu: Kondongdong Thetma.

Tamang, P. (1998). Tamang Jati ra Lhochhar Parampara. Kathmandu: Nepal Tamang Ghedung.

Tibetan Astronomy and Astrology A Brief Interduction. (1995). Dharmasala India: Men Tsee Khang.

Tsepak, R. (1993). Festival of Tibet. Dharmasala: Tibetan Works and Archives.

lama Khamsum W(2006).TibbatKo Paramparagat Lhosar, Baudha, Lama Khamsun Wangdi. New Yera. Kathmandu: Bishwa Matri Bikas Santha Nepal.

Rajbansi Shangkarman. (1997) Bhadau-Mangsir, Anusandhanko Ek Niskarsa, 1-5 Prachin.

Gurng, Prayaj S. (2004). blo Mustangko Sanskritika Sampada Nepal Asiyali Adhyayan Anusandhan Kendra, CNAS T.U.

Chaube Amal (1999) Pheng Shui. Delhi Hind Paket Books

# अजितमान तामाङ व्यक्तिवृत्त

आपा : जगनबहादुर तामाङ, आमा : सेलजोम तामाङ
श्रीमती : आशा दोङ तामाङ
छोरा : निमा जोक्छेन लोप्चन तामाङ, छोरी : पेरिस तामाङ
स्थायी ठेगाना : बोमताङ-५, नुवाकोट जिल्ला
अस्थायी ठेगाना : सानेपा, ललितपुर
धर्म : बौद्ध, पेशा : नोकरी, (पत्रकारिता)
शिक्षा : स्नातक इतिहास, पोष्ट ग्राजुयट इन बुदिष्ट स्टडिज, स्नातकोत्तर बौद्ध अध्ययन, त्रि.वि.वि., नेपाल, तथा स्नातकोत्तरसम्म भाषाविज्ञान, मानवशास्त्र त्रि.वि.वि., नेपाल
भाषा : १. तामाङ नेपाली, २. नेवारी (नेपालभाषा), ३. खस नेपाली ४. हिन्दीभारतीय, ५. अंग्रेजी, ६. वेसिक चाइनिज, ७. डुकुछाप दनुवार आदि ।

**अनुसन्धानमा संलग्न**

१. पहरी भाषाको अभिलेखीकरण- भाषाविज्ञान केन्द्रीय विभाग त्रि.वि.वि. र नेपाल आदिवासी जनजाति राष्ट्रिय उत्थान प्रतिष्ठान,
२. डुकुछापको दनुवार जातिको मौखिक इतिहास, लोकवार्ता तथा प्रदर्शनकारी लोक-कला बारे स्थलगत अध्ययन,
३. तामाङ जातिको इथ्नोग्राफिक प्रोफाइल नेपाल सरकार, स्थानिय विकास मन्त्रालय राष्ट्रिय जनजाति उत्थान प्रतिष्ठानका लागि -२०१०,
४. मातृभाषाको पाठ्य पुस्तक विकास तथा भाषा, लिपि, संस्कृति, इतिहास, पुरातत्व भेषभुषा, धर्म आदिको अध्ययनमा संलग्न ।

**पुरस्कार सम्मान**

१. "विशेष पुरस्कार", सन्ध्या साहित्यक पाला, पब्लिक युथ क्याम्पस, नेपालभाषाको उपत्यका स्तरिय कविता प्रतियोगिता,
२. "हपा सिरपा" पुरस्कार, भक्तपुर क्यापसद्वारा आयोजित नेपालभाषाको कविता उपत्यका स्तरिय प्रतियोगिता,
३. तेस्रो पुरस्कार, खस नेपाली भाषाको अन्तर निर्देशनालय स्तरिय, कविता प्रतियोगिता, ने.वि.प्रा.,
४. "फ्याफुल्ला पुरस्कार-२०५७" तामाङ समाज अनुसन्धान तथा विकास केन्द्र

**जेल यात्रा**

संकट कालमा तत्कालीन शाही नेपाली सेनाको रेन्जर गण भैरव नाथ गणमा पुस-जेठ सम्म वि.सं. २०६०-०६१ सैनिक हिरासत ।

**सामाजिक सेवा संलग्न**

१. पूर्व उपाध्यक्ष, नुवाकोट जिल्ला, जनवादी युवा लिग नेपाल सन् १९८९
२. आजीवन एवं संरक्षक सदस्य, पूर्व-केन्द्रीय सचिव तथा केन्द्रीय सदस्य, नेपाल तामाङ घेदुङ १९९४-२०००,
३. संस्थापक केन्द्रीय सदस्य तथा हाल, सल्लाहकार, तामाङ राष्ट्रिय मुक्ति मोर्चा

नेपाल-२०५५-२०६७,

४. संस्थापक सदस्य तामाङ प्राज्ञ सभा- वि.सं. २०६३,

५. आजीवन सदस्य, नेपाल भाषाविज्ञान समाज, त्रि.वि.-सन् २००४,

६. सा.स. नेपाल पत्रकार महासंघ, का.जि.- वि.सं. २०५६-०६८,

७. सदस्य, नेपाल विश्व सम्बन्ध परिषद् वि.सं. २०६५-०६८,

८. सदस्य-सूचना प्रविधिमा राष्ट्रिय भाषा उच्चस्तरीय आयोग, नेपाल सरकार विज्ञान र प्रविधि मन्त्रालय वि.सं. २०६६,

९. पूर्व-सदस्य सचिव-नेपाल सरकार, स्थानीय विकास मन्त्रालय, गुम्बा व्यवस्था तथा विकास समिति २०६४-०६६,

१०. वरिष्ठ-उपाध्यक्ष, नेपाल राष्ट्रिय कर्मचारी संगठन, नेपाल विद्युत प्राधिकरण, केन्द्रिय समिति- वि.सं. २०६३-०६९,

११. सचिव, नेपाल राष्ट्रिय कर्मचारी महासंघ, केन्द्रिय समिति-वि.सं. २०६५-०६८,

१२. केन्द्रीय सदस्य, आदिवासी जनजाति पत्रकार संघ

१३. केन्द्रीय महा-सचिव, आदिवासी जनजाति पत्रकार संघ

१४. सदस्य, इण्डिजिनस मिडिया प्रोजेक्ट, संयुक्त राष्ट्र संघ र मानव अधिकार आयोग, जेनेभा

**पत्रकारिता तथा सम्पादनमा संलग्न**

१. पृष्ट-संयोजक गोरखापत्र नयाँ नेपाल, तामाङ भाषाको पृष्ठ, गोरखापत्र संस्थान, सन् २००७ असोज १ गते देखि हालसम्म

२. प्रधान सम्पादक, तामाङभाषाको शब्दकोष, ने.ता.घे. र नेपाल प्रज्ञा प्रतिष्ठान, सन् २०११

३. "जाम्बुलीङ डीसरेला" (तामाङभाषा, तामयीग लिपिमा र खसभाषामा) सन् २०००-२००३

४. "कोनडीडडोड" तामाङभाषामा लिफ्लेट, सन् १९९०-२०००

५. ताम्सालीङ आवाज त्रैमासिक (प्रकाशोन्मुख), सन् २०१२

६. "छारम्हेन्दो" मुखपत्र, नेपाल तामाङ घेदुङ, सन् १९९०-२००१

७. "तामाङ" त्रैमासिक (सम्पूर्ण तामाङभाषामा), सन् १९९२-१९९३

८. "कृण तामाङला ब्लाईखा" तामाङ भाषाको कविता सङ्ग्रह, सन् १९९०

९. "यावेङ स्योङ" तामाङ भाषाको कथा सङ्ग्रह, सन् १९९९

१०. "डम्फुला स्हेर" पत्रिका, नेपाल डम्फु समाज, सन् १९८९

११. "नाङसाल" पत्रिका, कास्की, सन् १९९१

१२. "प्रतिभा" साहित्यिक पत्रिका, सन् १९९५

१३. "गान्तोक ह्युल्सा" गान्तोक सिक्किम, भारत, सन् २००३

१४. संस्थापन तथा कार्यक्रम निर्माता "तामाङ तामला ग्येताङ" तामाङ भाषाको कार्यक्रम मेट्रो एफ.एम., काठमाडौं महानगरपालिका, सन् १९९८

१०. "ह्याङला छार ताम्सालीङ टेलिभिजन कार्यक्रम (एनटीभि टु), सन् २००७

**तामाङ भाषामा अनुवाद**

१. प्रारम्भिक बालशिक्षा तथा शिशु स्याहार,
२. मानवअधिकार, संयुक्त राष्ट्र संघको मस्यौदा घोषणा-पत्र, पुस्तिका,
३. स्वास्थ्य मन्त्रालयको प्रचार सामाग्रीहरु, सन् १९९२,
४. प्रथम मातृभाषा सम्मेलनको घोषणा-पत्र, सन् २००२,
५. उष्ण कटबन्धिय क्षेत्रको आदिवासी जनजाति अधिकार सम्बन्धि मस्यौदा घोषणा-पत्र,
६. कोला न्हाबा (शिशुको जन्म) वृत्तचित्र कथा,
७. टेवोम्हेन्दो (सिरिसको फुल पारिजातको प्रशिद्ध उपन्यास),
८. अन्तरराष्ट्रिय बाल अधिकार महासन्धि, सन् १९८९,
९. अर्थमन्त्री डा. बाबु राम भट्टराईको बजेट वक्तव्य सार, सन् २०१०,
१०. सुर्तीजन्य ऐन २०११

**प्रकाशित कृतिहरु**

१. "ङ्याङलाकाइरनरी" तामाङ भाषाको कविता सङ्ग्रह, सन् १९९२,
२. "साङ्ग्ये ङ्याङला ग्याम" तामाङ भाषामा संक्षिप्त बुद्ध जीवनी, सन् १९९३
३. "यरु ल्युल्सा" तामाङ भाषाको कथा सङ्ग्रह, सन् १९९४
४. Basic word book for Tamag Language, 1994
५. "जोमक्लाङ, ओमक्लाङ, कोच्चाक्लाङ" (गाउँखाने कथा सङ्ग्रह), १९९५
६. "तामाङ ताम्पे" (तामाङ भाषाको उखान टुक्का सङ्ग्रह), सन् १९९५
७. "तामाङ ग्योत थेन छ्ये/यीग", १९९५
८. "तामाङ भाषाको लिपिको पहिचान र आलेखन प्रणाली", सन् १९९७
९. "तामयीग तामाङ लिपि, सन् १९९८
१०. तामाङ पकेट क्यालेन्डर, सन् १९९१-१९९६
११. "तामाङ जातिका मौखिक इतिहासका अवशेषहरु", २००२, २००३, २००६
१२. "तामाङ भाषाको डकुमेन्ट्रि" प्रथम अन्तरराष्ट्रिय तामाङ सम्मेलन, सन् २००२
१३. "ल्होछार" वा "लोसार" को इतिहास, सन् २००३
१४. तामाङ भित्ते क्यालेण्डर, सन् २००१/०१२
१५. तामयीग तामाङ लिपिको इतिहास र वंश, सन् २००६
१६. तामाङ भेषभूषा र गरगहना संक्षिप्त परिचय, सन् २००६
१७. दनुवार जातिको लोकवार्ता- नेपाली लोकवार्ता समाज, सन् २००६
१८. तामयीग लिपिमा तामाङ भाषाको मानक लेखन, सन् २०११
१९. नेपाल, चीन तथा भारतको बिभिन्न पत्र-पत्रिकाहरुमा तामाङ संस्कृति, चाडपर्व, इतिहास, भाषा, लिपिका बारेमा अनुसन्धानात्मक लेख, रचना प्रकाशित

**विभिन्न राष्ट्रिय तथा अन्तरराष्ट्रिय गोष्ठी, सभा तथा सम्मेलनहरुमा सहभागी**

1. NATIONAL CONFERENCE OF NEPAL TAMANG GHEDUNG,1990-2001.
2. NATIONAL CONGRESS OF NEFEN, KATHMANDU, 1992, 1994, 1996.

3. 5TH INTERNATIONAL CONFERENCE INEB, BANGKOK, THAILAND, FEB 1993.
4. NATIONAL SYMPOSIUM ON PROBLEMS AND SOLUTIONS OF THE IP LANGUAGE OF NEPAL, KATHMANDU, 15-16, 1993.
5. INT'L TAMANG IP LANGUAGE & SCRIP SYMPOSIUM, GANGTOK, SIKKIM, INDIA, 16-17, DEC-1995.
6. INTERNATIONAL ALLIANCE OF INDIGENOUS TRIBLE PEOPLES OF THE TROPICAL FORESTS SOUTH ASIA REGIONAL MEETING, NAGARKOT KATHMANDU, 29-30, MAY 1998.
7. NATIONAL CONSULTATION ON THE ESTABLISHMEN OF PERMANENT FORUM FOR IP PEOPLES IN UN SYSTEM, KATHMANDU SEP. 1998.
8. 14TH CONFERENCE OF ALL INDIA TAMANG BUDDHIST ASSOCIATION, NAMCHI, SIKKIM, 23-25 JAN. 1999.
9. INTERNATIONAL FIFTH HIMALAYAN LANGUAGE SYMPOSIUM, KATHMANDU, NEPAL, 13-15, SEP. 1999.
10. NATIONAL CONSULTATION ON THE RIGHTS OF INDIGENOUS PEOPLE, KATHMANDU SEP. 1999.
11. ASIAN WORKSHOP ON PERMANENT FORUM IN UN, , INDORE, INDIA, 22-26, SEP. 1999.
12. INTERNATIONAL ALLIANCE OF INDIGENOUS TRIBLE PEOPLES OF THE TROPICAL FORESTS THE SOUTH ASIA REGIONAL WORKSHO, WARANGAL, ANDHRA PRADESH, INDIA, 4-7, OCT. 2000.
13. National Consultation on Integrated strategies for promoting the rights of indigenous Peoples in NEPAL, 16-20, January 2000.
14. National Conference on Linguistic Rights Nepal. 16-17, March, 2000.
15. WORKSHOP ON TERAIN IP'S PROBLEMS IDENTIFICATION, JHAPA, NEPAL, 30-31, DEC. 2000.
16. INTERNATIONAL BUDDHIST CONFERENCE, LUMBINI, 1-2 FEB. 2001.
17. un WGIP 19th SESSION, GENEVA, switzerland, 23- 27, JULY 2001.
18. Asian Regional Conference to nominate Asian Indigenous Peoples representatives to the United Nations Permanent Forum on Indigenous Issues, DHULIKHEL, NEPAL, and 18-19 AUG, 2001.
19. World conference Against Racism, DURBAN South Africa, 27 aug-sep 8, 2001.
20. 17TH CONFERENCE OF ALL INDIA TAMANG BUDDHIST ASSOCIATION, CHALSA, WESTBENGAL INDIA, 23-25 JANUARY, 2002.
21. 18TH CONFERENCE OF ALL INDIA TAMANG BUDDHIST ASSOCIATION, kalingpong, Kapher, WESTBENGAL INDIA, 23-25 JANUARY, 2003
22. silver jublee year of established and 20TH CONFERENCE OF ALL INDIA TAMANG BUDDHIST ASSOCIATION, sukna, WESTBENGAL INDIA, 23-26 JANUARY, 2005.
२३. भारत, साउदी अरब, युएइ, स्वीजरल्याण्ड, थाइल्याण्ड, दक्षिण अफ्रिका, बेलायत आदि ।

**पत्राचार ठेगाना**

tamang.ajitman@gmail.com

९८४१-५२३३७९ (मोबाइल)

अजितमान तामाङ
नोगताङ-५, नुवाकोट जिल्ला



शिक्षा : स्वातक इतिहास, पोष्ट ग्राजुयट इन बुद्धिष्ट स्टडिज, स्नातकोत्तर बौद्ध अध्ययन त्रि.वि.वि., स्नातकोत्तरसम्म भाषाविज्ञान, मानवशास्त्र त्रि.वि.वि. नेपाल

भाषीक सीप : तामाङ, नेपाली, नेवारी (नेपालभाषा), खस नेपाली, हिन्दी भारतीय, अंग्रेजी, चैनिक चाइनिज, लेख्य तिब्बती, ड्रुकफ्याप दनुवार आदि ।

पत्राचार : पोष्ट बक्स नं. १९४७९, सुन्धारा, काठमाडौं
ई-मेल : ajitman4@yahoo.co.in , tamang.ajitman@gmail.com

**प्रकाशित कृतिहरु**

१. "ङ्याङलाकाओरनरी" तामाङभाषाको कविता सङ्ग्रह, सन् १९९२
२. "साङ्ग्ये ङ्याङला ग्याम" तामाङभाषामा संक्षिप्त बुद्ध जीवनी, सन् १९९३
३. "थरु ह्युल्सा" तामाङभाषाको कथा सङ्ग्रह, सन् १९९४
४. Basic word book for Tamag Language, 1994
५. "जोमक्लाङ, ओमक्लाङ, कोञ्च्याक्लाङ" (गाउँखाने कथा सङ्ग्रह), १९९५
६. "तामाङ ताम्पे" (तामाङभाषाको उखान टुक्का सङ्ग्रह), सन् १९९५
७. "तामाङ ग्योत थेन छ्ये/यीग", १९९५
८. "तामाङभाषाको लिपिको पहिचान र आलेखन प्रणाली", सन् १९९७
९. "तामयीग तामाङ लिपि, सन् १९९८
१०. तामाङ पकेट क्यालेन्डर, सन् १९९१-१९९६
११. "तामाङ जातिका मौखिक इतिहासका अवशेषहरु", २००२, २००३, २००६
१२. "तामाङभाषाको डकुमेन्ट्रि" प्रथम अन्तरर्राष्ट्रिय तामाङ सम्मेलन, सन् २००२
१३. "ल्होछार" वा "लोसार" को इतिहास, सन् २००३
१४. तामाङ भित्ते क्यालेण्डर, सन् १९९२/०१२
१५. तामयीग तामाङ लिपिको इतिहास र वंश, सन् २००६
१६. तामाङ भेषभूषा र गरगहना संक्षिप्त परिचय, सन् २००६
१७. दनुवार जातिको लोकवार्ता- नेपाली लोकवार्ता समाज, सन् २००६
१८. तामयीग लिपिमा तामाङभाषाको मानक लेखन, सन् २०११
१९. प्राचीन तत्वीय सम्वत् ल्होकोर च्युङनी, सन् २०१२
२०. तामाङ जातिको चिनारी (प्रकाशोन्मुख), सन् २०१२


ISBN : 9937-2-4418-3
9789937244183

**PRACHIN TATWIYA SAMBAT LHOKOR CHYUNGNI**
(An Ancient Elemental Era is Belongs to the part of 12th Animal Cycle)
An Introduction to the Lochhar Festival Based on the Elemental Astronomy

प्रकाशक : रीमठीम नेपाल

ने.रू./भा.रू. १००/-